• वर्ष १० • अङ्क १२ • श्रावण २०६६ • पूर्णाङ्क १२०


सम्पर्क कार्यालयहरू


- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर
  फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी,
  फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट,
  फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल,
  फोन: ०४६-५४००११
- **पाल्पा**, तानसेन,
  फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल,
  फोन:२२२००२१
- **गोरखा**, बसपार्क,
  फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा,
  फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१,
  फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि
  फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक,
  फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा
- **स्याङ्जा**, स्याङ्जाबजार
  फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे
  फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी
- **काठमाडौँ**, पुरानोबानेश्वर,
  फोन: ०१-२१०११२६


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं

***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**


## श्री शिव गोरक्ष विशेष


मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-


आफ्नै कुरा ३
गोरक्ष शब्दको बिचार ५
महायोगीको अवतरण प्रकरण ६
नेपालको इतिहासमा श्री शिव गोरक्ष ११
श्री शिव गोरक्ष महोत्सव १२
गोरखवाणीकै आत्मसात किन ? १३
...प्रसिद्ध गोरक्ष मन्दिरहरू १४
श्री शिव गोरक्ष प्रणीत हठयोग १७
श्री सावर संरचना शक्ति केन्द्र र प्रकाशित कृतिहरू १८
जागौँ नेपाली २१
दिव्य साधनात्मक सूत्रहरू २३
श्रावण महिनामा शिव आराधना २४
गुरु पूर्णिमा महोत्सव २६
श्रीकृष्ण पूजन २८
शक्ति रुपान्तरणको रहस्य गुरु परिक्षा ३१
विरहभित्रको प्रेम ३३
रोग वर्षाबाट बच्ने उपाय ३५
हस्तरेखा विज्ञान ३७
सद्गुरुदेवको अवतरण यात्रा ३९
श्रावण महिनाको सूक्ष्म काल विवरण ४१
योग ४५
गुरु गीता ४८
श्री गोरक्ष स्तवन ४९
आश्रम गतिविधि ५०
जाँदा जाँदै ५२

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, कल्की मन्दिरसँगै काठमाडौँमा रहेको छ । परमपूज्य सद्‌गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्‌गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

## परामर्श सेवासम्बन्धी सूचना

सिद्धाश्रम शक्ति केन्द्रमा परामर्श सेवासम्बन्धी प्राप्त सुविधा निम्नानुसार रहेको जानकारी गराइन्छ ।

| स्थान | समय | बार |
|---|---|---|
| केन्द्रीय कार्यालय | साँझ ४:३० बजेपछि | सोमबार र मङ्गलबार |
| ललितपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | मंगलबार र बिहीबार |
| भक्तपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | शनिबार र बुधबार |
| बनेपा सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | प्रत्येक आइतबार |

## आश्रमका नियमित कार्यक्रमहरू

- आश्रम खुल्ने समय : प्रत्येक दिन बिहान १०:०० बजेदेखि साँझ ६:०० बजेसम्म ।
- गोरक्ष निखिल पुस्तकालय खुल्ने समय : प्रत्येक दिन १०:०० बजेदेखि साँझ ५:०० बजेसम्म ।
- परामर्श सेवासम्बन्धी भेटघाट : अपराह्न ३:०० बजेपछि ।
- आरती : प्रत्येक साँझ ५:०० बजे ।
- गुरु पूजन : प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजेदेखि ।
- विशेष गुरु पूजन : प्रत्येक अंग्रेजी महिनाको २१ तारीख, बिहान १०:०० बजेदेखि ।
- आध्यात्मिक शक्ति अनुसन्धानमूलक नेपालको एक मात्र मासिक पत्रिका 'गोरक्ष निखिल वाणी'को नियमित प्रकाशन ।
- विभिन्न चाड-पर्व एवं अवसरहरूमा विशेष कार्यक्रम ।
- विशेष हवन: प्रत्येक महिनाको पहिलो सोमवार श्री शिव गोरक्ष हवन, पहिलो मङ्गलवार तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधवार तान्त्रोक्त महालक्ष्मी हवन र पहिलो बिहीवार तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम संचालन ।

**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग

**मुद्रण**
**भेराइटी प्रिन्टर्स प्रा.लि.**
कुलेश्वर, काठमाडौं ।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, कल्की मन्दिर, काठमाडौं, नेपाल**
**फोन नं:** २०७१२००,२१००१५३, **पत्रिका वितरण फोन नं:** ०१-६२२५१७७ (CDMA Phone), URL: www.gnv.org.np, Email: info@gnv.org.np

# ...कुरा

विश्वमा शान्त देशको रुपमा परिचित नेपाल आज अशान्तिको नमुना बनेको छ। चारैतिर हत्या, हिंसा, अशान्ति फैलिएको छ। सर्वत्र त्रास, भय र अनेकौं आशंका व्याप्त छन्। यी सबै कुराहरु घटनुको सट्टा झन्झन् बढिरहेका छन्, बढ्दाबढ्दै स्थिति पराकाष्ठामा पुगिसकेको छ, राष्ट्रको अस्तित्व नै अहिले खतरामा परिरहेको छ।

राष्ट्र र जनताको रक्षाको अभिभारा लिएका नेताहरुको चाल देख्दा लाज मान्नु सिवाय अरु केही गर्न सकिँदैन। उनीहरुप्रतिको सम्पूर्ण आशा र विश्वास नै मर्न लागिसकेको छ। देश जलिरहेको छ, राष्ट्रियता संकटमा परिसकेको छ तर पनि हाम्रा नेताहरु कुर्सीको खेलमा नै व्यस्त छन् । सबै आफ्नो निहित स्वार्थलाई मात्र हेर्ने, आफू अधिकारवान् बन्नलाई जे सुकै गर्न तयार हुने यस्ता नेताहरुमा कुनै आशा गर्नुभन्दा अब राष्ट्रको रक्षाको लागि जनता नै अघि सर्नु अत्यावश्यक भइरहेको छ। प्रत्येक नेपाली जाग्नुपर्ने बेला आएको छ।

हरेक समस्याले समाधान बोकेको हुन्छ। हाल राष्ट्रमा देखिएको यस समस्याको एउटै समाधान हो गोरक्ष शक्तिलाई जगाउनु जुन कुरा सिद्धाश्रम शक्ति केन्द्र नेपालले बारम्बार भन्दै आइरहेको छ । हाल राष्ट्रमा देखिएको सम्पूर्ण समस्याको अचूक समाधान नै गोरख भक्ति हो। इतिहास साक्षी छ नेपाल राष्ट्र सदा सर्वदा गुरु गोरखनाथको कृपाद्वारा नै रक्षित छ। त्यसैले त उहाँ हाम्रा राष्ट्रगुरु हुनुहुन्छ।

हामी सम्पूर्ण नेपालीहरुलाई जाग्नको लागि, गोरखभक्ति गर्दै आफ्नो राष्ट्रको रक्षा गर्नको लागि हार्दिक आह्वान गर्दछौं। श्रावण महिना भगवान शिवको महिना भएकोले शिवस्वरुप गुरु गोरखनाथको भक्ति गर्न यो महिना अत्युत्तम मानिन्छ। त्यसैले सिद्धाश्रम शक्ति केन्द्र नेपालले श्रावण महिनालाई 'श्री शिव गोरक्ष महोत्सव'को रुपमा मनाउँदै आएको छ। यस महोत्सवलाई त सम्पूर्ण राष्ट्रले नै, सम्पूर्ण नेपालीहरुले नै राष्ट्रिय महोत्सवको रुपमा मनाउनुपर्ने हो।

परम आराध्य, सत्यताका रक्षक गुरु गोरक्षको अभ्यर्थनामा नै हामीले यसपालिको अंकलाई 'श्री शिव गोरक्ष विशेष' को रुपमा प्रकाशित गरेका हौं। सम्पूर्ण योगीहरुमा महायोगी, सम्पूर्ण नाथहरुमा महानाथ, सम्पूर्ण गुरुहरुका महागुरु गुरु गोरखनाथको महिमा गाउनु, उहाँको वर्णन गर्नु मानवको वशको कुरा होइन। तर पनि हामीले गरेको यस जमर्कोबाट उहाँको विराटताको सानो अंश बुझेर मात्र पनि कोही उहाँको शरणमा पुग्न सक्दछ, आफ्नो जीवनलाई धन्य धन्य बनाउँदै उसले आफ्नो राष्ट्रको समेत रक्षा गर्न सक्दछ भनेर मात्र हामीले यो धृष्टता गरेका हौं।

अन्तमा यस अंकको प्रकाशनको क्रममा हामीबाट भएका न्यूनता, गल्तीहरुको लागि परमपूज्य सद्गुरुदेवहरुसमक्ष र यहाँहरुसमक्ष क्षमायाचना गर्दछौं। यहाँहरुको सल्लाह, सुझावहरुको हामी सदा नै अपेक्षा राख्दछौं। अस्तु!

# गोरक्ष शब्दको विचार

**व्याकरणका अनुसार–**

गां रक्षतीति गोरक्षः, रक्षतीति रक्षः, गवां रक्षः गोरक्षः, यावद्– गोपदवाच्यको जसले रक्षा गर्नुहुन्छ उहाँलाई गोरक्ष भनिन्छ । अर्थात् जति पनि गोशब्दका अर्थ छन्, ती अर्थहरूको रक्षा गर्नेको नाम गोरक्ष हो ।

**उपमानअनुसार–**

उपमितिको करणलाई उपमान भनिन्छ । उपमान उपमितिको असाधारण कारण हो । संज्ञा संज्ञी सम्बन्धज्ञान यसको भावार्थ हो, गोरक्ष शब्द संज्ञा त्यसको वाच्य संज्ञी अर्थ हो । गोरक्ष शब्दको चाक्षुष विषयताले त्यस वाच्यलाई उपस्थित गराउँछ ।

**कोषअनुसार–**

**स्वर्गेषुपशुवाग्वज्र दिङ्नेत्रघृणिभूजले । गौर्नादित्ये वलीवर्दे किरणक्रतुभेदयोरित्यमरः । स्त्री तु स्याद्दिशि भारत्यां, भूमौ च सुरभावपि । नृस्त्रियोः स्वर्गवज्राम्बुरश्मिदृग्बाणलोमसु, इति केशवः । 'गौः स्वर्गे च वलीवर्दे रश्मौ च कुलिशे पुमान्' इति केशवः । स्त्री सौरभेयी दृग्बाणदिग्वाग्भूष्वप्सु भूम्नि च, इति मेदिनी ।** स्वर्ग, बाण, पशु, वाणी, वज्र, दिशा, नेत्र, किरण, पृथ्वी, जल, सूर्य, साँढे, यज्ञ, सुरभि आदि गो शब्दका वाच्य हुन् । उपर्युक्त पदार्थहरूको रक्षाकर्ताको नाम गोरक्ष हो ।

**आप्तवचनअनुसार–**

आप्तस्तु यथार्थवक्ता, सत्यवक्ताको नाम आप्त हो, उसको वचनको नाम आप्तवचन हो । इहलौकिक पारलौकिक भेदले आप्तवाक्य दुई प्रकारले प्रसिद्ध छन् । दर्शन पुराण, इतिहासादि इहलौकिक, आप्तवचन हुन् । वेदका मन्त्र भाग, ब्राह्मणादि वचन पारलौकिक हुन्, प्रमाण प्रमेयादि दोषहरूका कारण मानवीय ज्ञान निर्भ्रान्त नभए पनि ईश्वरीय आर्ष यौगिक ज्ञान निर्भ्रान्त नै हो । **आर्षे– संज्ञायां च ६।२।७७। अण्णन्ते परे तन्तुवायो नाम कृमिः । अकृञ इत्येव रथकारो नाम ब्राह्मणः । गोतन्तियवं पाले ।६।२।७८। गोपालः । तन्तिपालः । अनियुक्तार्थो योगः । पाल इति किम् ? गोरक्षः । स्कोरिति कलोपः । गोरट् । गोरड् । गोरक्षौ गोरक्षः । तक्षिरक्षिभ्यां ण्यन्ताभ्यां क्विपि तु स्कोरिति न प्रवर्तते णिलोपस्य स्थानिवद्भावात् । पूर्वत्रासिद्धीये न स्थानिवदिति तु, इह नास्ति । तस्य दोषः संयोगादिलोपलत्वणत्वेष्विति निषेधात् । तस्मात्संयोगान्तलोप एव गोरक् । गोरग् । गोरक्षौ । गोरक्षः । स्कोरिति कलोपंप्रति कुत्वस्यासिद्धत्वात्संयोगान्तलोप एव ॥** यो शब्द संज्ञामा सस्वर सिद्ध होला । तर कृञ् धातुलाई छोडेर मात्र हुनेछ । रथकारो ब्राह्मणः । यहाँ कृञ्को नै प्रयोग भएको छ । गोपाल तन्तिपाल शब्दहरूको स्वर होला, गो शब्दबाट उत्तर पाल हुनु आवश्यक छ । पाल किन भनिएको हो ? गो शब्दबाट रक्ष पर रहन्छ– यो स्वर हुँदैन, जस्तै– गोरक्ष यहाँ गो शब्द रक्ष परत्व हो । रक्षि रक्षि धातुहरूबाट ण्यन्तले क्विप् गर्नाले पनि यो गोरक्ष शब्द सिद्ध हुन सक्दछ । स्कोःसूत्रको प्राप्ति नहोला, णिलोपलाई स्थानिवद् भाव मान्नुपर्ने हुन्छ । पूर्वत्रासिद्धीय स्थानिवद् भावको बाधक हुँदैन । यी निषेध संयोगादि लोपलत्वणत्वमा नै प्रवर्तित हुन्छन् । अतः संयोगान्त लोप मान्नु उचित हुन्छ । स्कोःसूत्रको कलोपप्रति कुत्व असिद्ध हो । वेदमन्त्रभागबाट– **आयं गौः पृश्निरक्रमी दसदन् मातरम्पुरः पितरञ्च प्रयन्त्स्वः ।** य० अ० ३। मं ६।

**गोत्रभिदं गोविदं वज्रबाहुं जयन्तमज्म प्रमृणन्तमोजसा । इमँ स जाता अनुवीरयध्वमिन्द्र सखायो अनुसँ रमध्वम् ॥** यजुः– अ० १७। मं ३८ **गोभिर्न सोममश्विना मा सरेण परिस्रुता । समधातँ सरस्वत्या स्वाहेन्द्रो सुतं मधु ॥** यजुः– अ० २०। मं० ६६। वेद ब्राह्मण भागबाट–

**इन्द्रस्त्वं प्राणतेजसा रुद्रोऽसि परिरक्षिता ।**

**त्वमन्तरिक्षे चरसि सूर्यस्त्वं ज्योतिषां पतिः ॥** अ. २।मं.९।

**प्राणस्येदं वशे सर्वं त्रिदिवे यत्प्रतिष्ठितम् ।**

**मातेव पुत्रान् रक्षस्व श्रीश्च प्रज्ञां च विधेहि नः ॥**ख.२।१०। इत्यादि मन्त्रहरूमा गो र रक्षको उही अर्थ छ जुन गोरक्ष शब्द सर्वत्र प्रसिद्ध छ ।

जय गुरुदेव ।

# महायोगीको अवतरण प्रकरण

नेपाल र नेपालीका मात्र नभई विश्वकै सम्पदा मानिनुभएका महायोगी श्री श्री महायोगी गुरु गोरखनाथको उत्पत्तिलाई धेरै लेखक, इतिहासकारहरूले विभिन्न समय र कालखण्डमा भएको अनुमान लगाएको पाइन्छ। महायोगीको उत्पत्ति उहाँले त्यतिबेला दिनुभएको महत्त्वपूर्ण शैक्षिक, सामाजिक, धार्मिक आदि योगदानहरूको आधारमा दसदेखि पन्ध्रौँ शताब्दीतिर भएको भनी उल्लेख गरेको पाइन्छ । उहाँको उत्पत्तिसम्बन्धमा भारतका विद्वान् लेखकहरूले धेरै ठाउँमा उल्लेख गरेका छन् । उल्लिखित ती घटनाहरूलाई नै अन्य लेखकहरूले सन्दर्भको रूपमा लिने गरेको पाइन्छ ।

महायोगीको उत्पत्ति पाकिस्तानको रावलपिण्डीमा बाह्रौँ शताब्दीतिर भएको जनश्रुति पाइन्छ। यो जनश्रुति मराठी भाषीमा भए पनि अन्य भाषाहरूमा पनि पाइएको इतिहासकार एवं लेखकहरू बताउँछन्। विशेष महत्त्वको यस जनश्रुति यसप्रकार छ– हालको पाकिस्तानमा पर्ने रावलपिण्डीको गाउँको कुनै एक घरमा 'अलख-निरंजन'को आवाज सुनिन्छ । यस आवाजसँगै एकजना बाबा भिक्षा माग्न आएको ठानी घरभित्रबाट एउटी महिला भिक्षासहित बाहिर निस्किन्छिन् । महिला चिन्ताग्रस्त देखिएकीले बाबाले त्यसको कारण सोध्नुहुन्छ ।

गहभरी आँसु बनाउँदै विवाह भएको धेरै वर्ष भइसकेको र हालसम्म पनि आमा बन्ने सौभाग्य प्राप्त नभएको, सबै छिमेकीहरूले अलच्छिनी, पापिनी भनी लाञ्छना लगाएर अपहेलना गरेको दु:खेसो ती महिलाले बाबासमक्ष राख्छिन् ।

महिलाको यस्तो अवस्था देखी बाबालाई दया जाग्छ र उहाँले कृपास्वरूप बुटी खान दिनुहुन्छ । बाबाले उक्त महिलालाई वरदान दिँदै भन्नुहुन्छ– 'भगवान् शिवको कृपाले छिट्टै नै तिम्रो सुसंस्कारित पुत्रको जन्म हुनेछ ।' महिलाले उक्त बुटी खानको लागि के सोचेकी मात्र थिइन्, बाबासँगको संवाद सुनिरहेकी एउटी छिमेकी महिलालाई ईर्ष्या जाग्छ । ईर्ष्यालु उक्त छिमेकीले तत्कालै शंका व्यक्त गर्दै अति होच्याएर 'यस्तो भीख मागेर हिँड्ने जोगीले दिएको बुटी खाएर कहीं बच्चा हुन्छ ? बच्चा त भगवान्को देन हो, भगवान्को कृपाले मात्र सम्भव छ' भनी तीखो वचन लगाएको रीसको झोंकमा ती महिलाले बाबाले दिनुभएको बुटीलाई विश्वासै नगरी फोहोर फाल्ने ठाउँमा लगेर फ्याँक्छिन् ।

समय बित्दै जाँदा बाह्र वर्षपछि पहिलाकै बाबा पुन: तिनै महिलाको घरमा घुम्दै पुग्नुहुन्छ । यतिका वर्षपछि पनि ती महिला पहिलेकै जस्तो उदास, चिन्तित देखेर बाबाले आश्चर्य मान्दै सबै सोध्नुहुन्छ र ती महिलाले छिमेकीले होच्याएकोले बुटी फालिदिएको बाबालाई बताउँछिन् । बाबाले उक्त बुटी फालेको ठाउँ देखाउन भन्नुहुन्छ र ती महिलाले उक्त बुटी फालेको ठाउँमा बाबालाई लिएर जान्छिन् । बाबाले जोडसँग 'अलख निरञ्जन' भनेर बोलाउनुहुन्छ र त्यस दिव्य आवाजसँगै उतिखेरै एक दिव्य अत्यन्त सुन्दर गौरवर्णयुक्त तेजस्वी बालक निस्की बाबाको नजिक जानुहुन्छ । यस्तो दृश्य देखी ती महिला आश्चर्य र विस्मयका साथ प्रायश्चित्त गर्दै रुन-कराउन लाग्छिन् । बाबा र दिव्य बालक त्यहाँबाट अन्तर्ध्यान हुनुभयो । बाबा हुनुहुन्थ्यो योगीराज मत्स्येन्द्रनाथ र दिव्य बालक हुनुहुन्थ्यो श्री श्री महायोगी गुरु गोरखनाथ । गोबरबाट निस्कनुभएकोले गुरु मत्स्येन्द्रनाथले उहाँको नाम गोरखनाथ राख्नुभयो ।

नेपाली परम्परालाई आधार मानेर 'भारतीय दर्शन प्रकाश'मा राधेश्याम शर्माले लेखेका छन्– 'महादेवले एक पुत्रको आकांक्षा राख्ने नारीलाई विभूति दिनुभयो। उक्त नारीले अविश्वास गरी गोबरको थुप्रोमा फालिदिइन् । बाह्र वर्षपछि महादेव पुन: आई अनुसन्धान गर्दा उक्त स्थानबाट गोरक्षनाथको उत्पत्ति भयो ।' गुरु गोरखनाथ दक्षिण दिशातर्फ बड्व नामको देशमा

महामन्त्रको प्रसादबाट प्रकट हुनुभएको थियो[1] जसको उल्लेख गोरखपुरबाट प्रकाशित योगवाणी (वर्ष-२, अंक २, १९७७ पृष्ठ १८-१९) मा पनि भएको छ ।

भगवान् शिवका एक भक्तले सन्तानोत्पत्तिको इच्छा राखेर भगवान् शिवको प्रार्थना गरे । भगवान् शिवले खुशी भई शिवधुनीबाट भस्म झिकेर दिनुभयो । त्यो भस्म उनले आफ्नी पत्नीलाई खान दिएछन् । पत्नीले लोकको डरले उक्त भस्मलाई फोहोरमा फालिदिइन् । फालिएको भस्म खेर गएन । त्यसैबाट एक होनहार दिव्य बालकको उत्पत्ति भयो र भगवान् शिवले उक्त बालकको नाम गोरक्षनाथ राखिदिनुभयो ।[2]

ब्रिग्सले उल्लेख गरेअनुसार यस संसारको सृष्टि हुँदा नै गुरु गोरखनाथ धुनी जगाएर तपस्यारत हुनुहुन्थ्यो । विष्णु भगवान् कमलको फूलबाट निस्कँदा गुरु गोरखनाथ पातालमा हुनुहुन्थ्यो र ब्रह्माजीले संसार सृष्टि गर्न लाग्दा फोहोर पानीको कारणले समस्या पर्‍यो । उहाँले श्री श्री गुरु गोरखनाथसँग सहायता माग्नुभएको र श्री गुरु गोरक्षले धुनीबाट खरानी दिई ' पानीमा छर्कनू, त्यहीँबाट तिमीले विश्व सृजना गर्न सक्नेछौ' भन्नुभएको र त्यसैअनुरूप भएकोले ब्रह्मा, विष्णु र शिव नै गुरु गोरक्षनाथका प्रारम्भिक अनुयायी भएको कुरा उल्लेख छ ।

महायोगी गुरु गोरखनाथलाई शिव गोरक्षको रूपमा आदर-सम्मान गरिएको छ । गोरक्षनाथको उत्पत्ति मत्स्येन्द्रनाथको कृपाबाट भएको हो । भिक्षाटनको समयमा मत्स्येन्द्रनाथले गोदावरी नदीको किनारमा एक सदाचारी ब्राह्मणदम्पति सुराज एवं सरस्वतीको पुत्र प्राप्तिको इच्छापूर्ति गर्न भस्म दिनुभयो । त्यहीँबाट गोरक्षनाथ आविर्भूत हुनुभयो ।[3]

यसरी प्राय: विद्वान्हरूले उल्लेख गरेका घटनामा भस्म दिनुभएको प्रसङ्ग नै बढी उल्लेख भएको पाइन्छ । गुरु गोरखनाथ कुनै घर-परिवारमा जन्मेको ठोस प्रमाण भेटिँदैन, न त आमा-बुबाको सही ठेगाना नै प्राप्त हुन्छ ।

**समय सन्दर्भ र शास्त्र प्रमाण :**

जसरी श्री श्री महायोगी गुरु गोरखनाथको उत्पत्ति प्रकरण विवादास्पद छ, तथ्यहरूले वास्तविकता झल्काउन नसकेको महसुस हुन्छ । त्यस्तै उहाँको उत्पत्ति समय पनि कम विवादास्पद छैन । प्राय: लेखकहरूले दिव्यतम महायोगीलाई समयको सीमाभित्र बाँध्ने धृष्टता गरेको पाइन्छ । हुन त विद्वान्, लेखक, इतिहासकारहरूले इतिहासका अन्य घटनाजस्तै सामान्य व्यक्तिको जीवनशैलीलाई उतार्ने कोशिश गरेजस्तो महायोगीको जीवनशैलीलाई पनि सीमित समयलाई आधार मानी इतिहास बनाउन खोज्दा मतभेद हुन गएको कुरालाई स्वाभाविक ठान्नुपर्दछ ।

विदेशी लेखक ब्रिग्सले उल्लेख गरेअनुसार यस संसारको सृष्टि हुँदा नै गुरु गोरखनाथ धुनी जगाएर तपस्यारत हुनुहुन्थ्यो । विष्णु भगवान् कमलको फूलबाट निस्कँदा गुरु गोरखनाथ पातालमा हुनुहुन्थ्यो र ब्रह्माजीले संसार सृष्टि गर्न लाग्दा फोहोर पानीको कारणले समस्या पर्‍यो । उहाँले श्री श्री गुरु गोरखनाथसँग सहायता माग्नुभएको र श्री गुरु गोरक्षले धुनीबाट खरानी दिई 'पानीमा छर्कनू, त्यहीँबाट तिमीले विश्व सृजना गर्न सक्नेछौ' भन्नुभएको र त्यसैअनुरूप भएकोले ब्रह्मा, विष्णु र शिव नै गुरु गोरक्षनाथका प्रारम्भिक अनुयायी भएको कुरा उल्लेख छ ।

गुरु गोरक्षको बारेमा वेदलगायतका शास्त्रहरूमा विभिन्न प्रसंगहरूको उल्लेख पाइन्छ । गुरु गोरक्ष नामको अर्थ प्रस्तुत श्लोकबाट पनि केही प्रष्ट हुन्छ–

**गोरक्षति गोरक्षः रक्षनीति रक्ष, ग्वांरक्ष गोरक्षः**

गोप वाच्यको जसले रक्षा गर्छ उहाँलाई गोरक्ष भनिन्छ । 'गो' शब्दको अर्थभित्र समाहित सम्पूर्णको रक्षा गर्नेवाला नै

## श्री गोरक्ष-प्रशस्ति

**ब्रह्मणां च परं ब्रह्म रुद्रादीनां शिरोमणिः ।**
**त्रैलोक्यं निमित येन श्री गोरक्ष नमोऽस्तुते ।।**
**सर्वगुणो गुणाभावो निर्गुणश्च गुण स्थितः ।**
**साकारो वा निराकारः श्री गोरक्ष नमोऽस्तुते ।।**
**स्वः पूजयन्ति देवास्तं, मर्त्यलोके च मानवाः ।**
**पाताले नागलोकश्च श्री गोरक्ष नमोऽस्तुते ।।**
**एकाकी वर्तते नित्यः भव पाश विवर्जितः ।**
**परं ब्रह्माक्षयं ज्योतिः श्री गोरक्ष नमोऽस्तुते ।।**

'हे गोरखनाथजी' जो अनेकौं ब्रह्माहरूका पनि परमब्रह्म र रुद्रादिहरूका शिरोमणि हुनुहुन्छ तथा जसले तीनै लोकको सृजना गर्नुभयो, हजूरलाई नमस्कार छ । हजूर समस्त गुणहरूका आश्रय अथवा गुणातीत र निर्गुण अथवा सगुण साकार सबै हुनुहुन्छ, हजूरलाई नमस्कार छ । श्री गोरक्ष ! स्वर्गलोकमा देवता, मृत्युलोकमा मनुष्य र पाताललोकमा नागगण हजूरको पूजा गर्दछन् । हजूरलाई नमस्कार छ । श्री गोरक्ष ! हजूर सांसारिक द्वन्द्वहरूको बन्धनबाट नितान्त मुक्त भएर नित्य परमात्मास्वरूपमा स्थित हुनुहुन्छ, अक्षय ज्योतिस्वरूपमा स्थित हुनुहुन्छ, अक्षय ज्योतिस्वरूप परब्रह्म हुनुहुन्छ, अत: हजूरलाई नमस्कार छ ।

गोरक्ष हो । स्वर्ग, वाण, पशु, वाणी, वज्र, दिशा, नेत्र, किरण, पृथ्वी, जल, सूर्य, गोरु, यज्ञ, सुरभि, गाई आदि गो शब्दका वाच्य हुन् । यिनीहरू सबैका रक्षाकर्ता, पालन-पोषण, सुरक्षा सम्पूर्ण संचालकको नाम नै गोरक्ष हो ।

नेपाली बृहत् शब्दकोषमा पनि यस शब्दको अर्थमा गाई, गौ, पृथ्वी, गोरु, इन्द्रिय भन्ने उल्लेख पाइन्छ । हाम्रो हिन्दू धर्म संस्कृतिमा गाईलाई लक्ष्मीको रूपमा मानिन्छ एवं सम्पूर्ण देवीदेवताहरूको वासस्थानको केन्द्र भनिन्छ । गाईको रक्षाभित्र धर्मको रक्षा हुने भनी गाईलाई पवित्र र देवीको रूपमा पूजा गर्ने, गाई देखे ढोग्ने चलन हालसम्म पनि प्रचलनमा छँदैछ । धर्मको रक्षा गर्ने, पृथ्वीको रक्षा गर्ने, इन्द्रियको नियन्त्रण गर्ने केवल गोरक्ष हुने अर्थबाट पनि गुरु गोरक्षको महिमा स्पष्ट हुन्छ । इन्द्रिय नभएको व्यक्ति नै हुँदैन । मानव, दानव, देवतालगायत सम्पूर्णका आराध्यदेव, सबैको रक्षा गर्ने गुरु गोरक्षको उच्चता, उहाँको अनुलनीय, अकल्पनीय व्यक्तित्त्वको न त शब्दमा चर्चा सम्भव छ, न त कुनै शास्त्रमा नै । यसरी परापूर्वकालदेखि सनातन अनादि भएको प्रष्ट हुन आउँछ । सम्पूर्ण सृष्टिलगायत र सृष्टिको रक्षा गर्ने गोरक्षको इतिहास प्राचीन, अविनाशी, अनादि भएकोले उहाँको जन्म, मृत्यु आदिको प्रश्न नै उठ्दैन ।

त्यस्तै वेदका मन्त्रहरू जस्तो यजुर्वेद, अथर्ववेद आदिका मन्त्रहरूमा 'रक्ष' को अर्थ त्यही पाइन्छ जुन गोरक्षको अर्थ सर्वत्र प्रसिद्ध छ । ब्रह्माण्डपुराण हयग्रीव संवाद ललितापुर वर्णनमा उल्लेख पाइन्छ–

**तस्य चोत्तरकोणे तु वायुलोको महाद्युतिः ।**
**तत्र वायुशरीराश्च सदानन्द महोदयाः ॥**
**सिद्धा दिव्यर्षवश्चैव, पवनाभ्यासिनोऽपरे ।**
**गोरक्ष प्रमुखाश्चान्ये, योगिनो योगतत्पराः ॥**

अर्थात्, उत्तर कोण महाद्युति वायुलोकमा आनन्दमा निमग्न सिद्ध योगीराज गुरु गोरक्ष निवास गर्नुहुन्छ र उहाँका साथमा दिव्य योगीहरू रहनुहुन्छ । त्यस्तै स्कन्दपुराणअन्तर्गत केदारखण्डको ४२ औं अध्यायमा भगवान् आदिनाथ शिव जगदम्बिके माताको प्रश्नको उत्तर दिँदै गोरक्षनाथ आश्रमको बारेमा यसरी व्याख्या गर्नुहुन्छ–

**तस्माद् दक्षिणतो देवि ! गोरक्षाश्रम रक्षकः । यत्र सिद्धो महादेवी ! गोरक्षो वसतेऽनिशम् ॥१॥**

**तल्लिङ्गन्तु प्रवक्ष्यामि, शृणु पुष्यतमं स्थलम् । महातप्तजलं तत्र वर्तते, सर्वदैव हि ॥२॥**

'एक अत्यन्त रमणीय एवं पवित्र गोरक्षाश्रम छ जहाँ सिद्धाधिराज गोरक्षनाथ निवास गर्नुहुन्छ जुन अत्यन्त पुण्यतम स्थान हो' भनी पार्वतीलाई बताइएबाट पनि गुरु गोरक्षको महिमा, उहाँको उच्चता परापूर्वकालदेखि नै सबैको लागि वर्णनयोग्य र उदाहरणीय मान्ने गरेको पाइन्छ ।

महायोगी श्री गुरु गोरखनाथ शिव नै हुनुभएकोले शिव गोरक्षको रूपमा आदरका साथ श्रद्धा, भक्ति र विश्वासको केन्द्र मानी धेरैले वर्णन गरेका प्रसंगहरू शिव पुराणमा पाइन्छन् । शिव पुराणको सप्तम अध्यायमा सृष्टिकर्ता ब्रह्माले शिवको अवतार भनी वर्णन गरेका यी श्लोकहरू प्रासङ्गिक होलान्–

**शिवो गोरक्षरूपेण, योगशास्त्रं जु गोपह ।**
**यमाद्यङ गै र्यथास्थाने, स्थापिता योगिनोदपिच**

भगवान् शिवले गोरक्षरूपमा योग र योगीहरूको रक्षा तथा सारा विश्वको कल्याणको लागि योग शास्त्रको सत्यता यम, नियम आदिद्वारा प्रमाणित गर्ने गरेको कुराको उल्लेख छ । भगवान् शिव गोरक्षले संसारको रक्षा, विश्वकल्याण गर्ने

**जगत्त्राण दक्षं नमत्प्राण पक्षं हटाकुष्ट योगं सदात्यक्त भोगम् ।**
**वियच्चारि संचारि वत्मंन्युदारं सुगोरक्ष गोरक्षनाथं नताः स्म ।।**

जो जगत्का प्राणीहरुलाई कृपापूर्वक रक्षा गर्नमा परमसमर्थ हुनुहुन्छ, आफ्ना भक्तहरुलाई प्राणमयी शक्तिले सम्पन्न गर्नुहुन्छ, जसले हठपूर्वक कठोर योगाभ्यास गरेर सिद्धि प्राप्त गर्नुभयो, जसले सदाका लागि जीवनका विषयोभोग सुखलाई त्याग्नुभयो, जो खेचरी मुद्रामा निरन्तर तत्पर हुनुहुन्छ, जो परम उदार कारुणिक हुनुहुन्छ, इन्द्रियजयी गोरक्षनाथलाई हामी प्रणाम गर्दछौँ ।

महायोगीको प्रथम प्रकट स्थल – गोरखगुफा, गोरखा

कुरा स्पष्टरूपमा वर्णन भएबाट पनि परापूर्वकालीन भएको कुरामा थप प्रमाण भेटिन्छ । परापूर्वकालदेखि नै ऋषिहरू, योगी, महर्षि, देवीदेवतालगायत देवगुरु बृहस्पतिले समेत गुरु गोरक्षको सहयोग लिनुभएको, उहाँको आशीर्वाद प्राप्त गर्नुभएको प्रसङ्ग गोरक्ष गीतामा उल्लेख भएको पाइन्छ ।

द्वापर युगको अन्तमा ऋषभबाट नवनारायणको जन्म भयो । नारदको परामर्शबाट नवनारायण योगमार्गद्वारा त्रिताप संतापित लोकको उद्धारका लागि कैलाशमा महादेवनिकट जानुभयो । महादेवको कृपाबाट गोरक्षनाथको प्रकट भयो ।[४]

भनिन्छ, नेपालमा गोरक्ष युग थियो रे । विदेशी लेखकहरूका अनुसार नेपालमा गोरखा राज्य थियो र त्यहाँ बस्ने गोर्खाली जातिहरू गुरु गोरखनाथलाई नै आफ्ना आराध्यदेव मान्दथे । गोरखा राज्य पनि गुरु गोरखनाथको नामबाट नै रहेको उल्लेख एकातिर पाइन्छ भने अर्कोतिर नेपाली इतिहासकारहरू पनि शाहवंशीय राजाहरूमा उहाँको उच्च किसिमको आदर-सम्मान हुने, उहाँलाई आफ्नो पूज्यदेव मान्ने, प्रत्येक कार्य गुरु गोरखनाथलाई सम्झेर मात्र गर्ने र त्यतिबेलाका राजाहरूले पैसामा पनि 'गोरष' लेख्ने गर्दथे भन्ने धारणा राख्दछन् । यसबाट पनि उहाँको कति व्यापकरूपमा प्रसिद्धि थियो भन्ने तथ्य प्रमाणित हुन्छ । अठारौँ शताब्दीको अन्त्यतिर जन्मनुभएका पृथ्वीनारायण शाहलाई बूढा योगीको स्वरूपमा उपस्थित भई आशीर्वाद दिनुभएको, दही खान दिनुभएको कुरा नेपालको इतिहासमा स्वर्णाक्षरले लेखिएको छ भन्दा दुईमत नहोला । राजा द्रव्य शाहलाई गोरक्षाधीश भनेर सम्बोधन गरिनु, त्यस्तै अन्य राजाहरूलाई पनि गरिनुबाट गुरु गोरक्षको प्रभावको बारेमा उल्लेख गर्न असम्भव नै देखिन्छ ।

हालसम्म पनि नेपालको मुद्रामा गुरु गोरखनाथको नाम तथा पादुका अंकित भएको पाइन्छ । यसरी नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी गुरु गोरखनाथकै कृपा, आशीर्वादले नेपालीहरू विश्वमा वीर गोर्खालीको नामबाट गर्व गर्छन् । खुकुरीको भरमा अंग्रेजहरूलाई परास्त गर्नु गुरु गोरखनाथकै कृपाको परिणाम हो भन्दा दुईमत नहोला । तर पनि हामीले उहाँलाई उचित मान, सम्मान, आदर दिन सकिरहेका छैनौँ ।

महायोगी समय, कालखण्डभन्दा माथि, नाथहरूका महानाथ, देश, काल, स्थानभन्दा धेरै माथिका अद्वितीय महापुरुष हुनुहुन्छ । यसैले पनि उहाँका गोरखलीलाहरू बुझ्ने क्षमता, सामर्थ्य सामान्य पृथ्वीबासीहरूमा हुने कुरै भएन । लेखकको पनि एउटा सीमा हुन्छ, अनुसन्धान गर्नेले पनि प्राप्त सामग्रीको आधारमा मात्र अनुसन्धान गर्न सक्दछन्, इतिहास लेख्नेले पनि प्राप्त प्रमाणहरू, उपलब्ध शिलालेख, ऐतिहासिक किंवदन्ती, कथा आदिलाई माध्यम बनाएर मात्रै लेख्न सक्दछन् । यसरी प्राप्त सामग्रीहरूलाई मात्रै आधार बनाई गरिएका अनुसन्धान र इतिहासले पूर्णताको परिचय दिन सक्दैन । यी सम्पूर्ण प्रमाण र इतिहासलाई समेटेर साधनाको माध्यमद्वारा र अनेकौँ सिद्ध आत्माहरूसँग सम्पर्क गरेर भए पनि महायोगीको बारेमा सत्य, तथ्य र वास्तविकतालाई सम्पूर्ण समाजसमक्ष राख्दै उहाँको उच्चता र महानतालाई पूर्णरूपले आदर, सम्मान दिलाउँदै उहाँकै निर्देशनमा आध्यात्मिक युग निर्माणको लागि प्रयत्नशील सिद्धाश्रम शक्ति केन्द्रले आफ्नो प्रयत्नलाई निरन्तरता दिँदै अघि बढिरहेको छ ।

श्री गुरु गोरक्ष अनादि, अजर, अमर हुनुहुन्छ । यसैले पनि उहाँको जन्म मरणको प्रसंग नै उठ्दैन । आजसम्मका सम्पूर्ण धर्मगुरुहरूमा छुट्टै पहिचानका साथ, अलग्गै व्यक्तित्वको परिचायक महायोगी गुरु गोरक्षनाथ शिवकै अवतार, शिवकै स्वरूपमा शिव नै हुनुहुन्छ । भगवान् शिवको बारेमा हाम्रा धर्मशास्त्रहरूमा भनिएको छ कि उहाँ अनादि, अजर, अमर हुनुहुन्छ; उहाँको न त जन्म हुन्छ, न त मृत्यु, न त आमाबुबा, न कुल घरान । त्यसरी नै महायोगी शिव गोरक्ष पनि साक्षात् शिव गोरक्ष हुनुभएकोले उहाँको बारेमा न त कुल घरान, न त जन्मतिथि, न त जन्मस्थान, न आमाबाबुको नै स्पष्टरूपमा उल्लेख पाइन्छ । यस सम्बन्धमा परापूर्वकालदेखि नै विभिन्न घटना, प्रसंगहरूको व्यापकरूपमा उल्लेख पाइन्छ ।

ब्रह्माजीलाई समेत सृष्टि गर्न सहायता गर्नुहुने गुरु गोरखनाथ सृष्टिभन्दा पहिले पनि विराजमान हुनुहुन्थ्यो भन्ने प्रमाणित हुन्छ । यसबाट सृष्टिजगत्भन्दा बाहिरको अस्तित्त्वको पनि संकेत मिल्दछ । त्यो 'बाहिर' सृष्टिभन्दा पहिले पनि थियो, सृष्टिकालमा पनि छ र प्रलयकालमा

पनि रहन्छ । यही शाश्वत् सत्यलाई बुझ्न नसक्दा मानिसहरूबीच भ्रम सृजना भएको छ। यही भ्रमले गर्दा गुरु गोरखनाथको प्रकरणमा विभिन्न विवादहरू सृजना भएका छन् । सत्य कुरा त यो हो कि जसको न जन्म छ न त मरण, जो सदा सदा रहनुहुन्छ, उहाँको आगमन कुनै पनि कालमा हुन्छ र हुन सक्छ । त्यो काल वा समयमा भएका उहाँका प्राकट्य प्रकरणलाई लिएर यति-उति शताब्दीमा उहाँ फलाना ठाउँमा जन्मनुभएको वा देखिनुभएको भन्ने विषयलाई महत्त्व दिएर उहाँको समय र स्थान निर्धारण गर्नु बुद्धिमानी होइन । बरु हामीले सबैले जुन जुन समय र कालमा उहाँ यस धरामा प्रकट हुनुभयो, त्यो त्यो समय र स्थानलाई पनि सत्य मानेर उहाँको प्राकट्यको ती अवधिलाई लीला मान्दा नै निर्विवाद हुन जाने कुरामा दुईमत हुने छैन । समस्त चराचर जगत्को कल्याणका लागि श्री शिव गोरक्षको रूपमा प्रकट हुनुहुने गुरु गोरखनाथ चारै युगमा जहाँ, जहिले र जस्तोसुकै अवस्थामा प्रकट हुनुहुने भएकाले वर्तमान यस समयमा पनि उहाँ कतै न कतै प्रकट हुनुभएर कुनै न कुनै लीला देखाउँदै गर्नुभएको सम्भावनालाई पनि नकार्न सकिन्न । हामीले अनुसन्धान गर्ने हो, उहाँको प्रबल भक्ति गर्ने हो । यसबाट उहाँ खुशी हुनुभएर तत्क्षण नै जाज्वल्यमान् स्वरूपमा उहाँको दर्शन प्राप्त भएमा हाम्रो यो परम सौभाग्य ठहरिनेछ ।

जय गुरुदेव !

*सन्दर्भग्रन्थहरू :*


*१. 'गोरक्ष सहस्रनाम' ।*

*२. जर्ज वेस्टन ब्रिग्स, गोरखनाथ एण्ड द कानफट्टा योगीज् ।*

*३. योगीसम्प्रदायाविष्कृति ।*

*४. योगीसम्प्रदायाविष्कृति ।*


# श्री गोरक्षनाथ स्तुति

निरञ्जनो निराकारो निर्विकल्पो निरामयः ।
अगम्योऽगोचरऽलक्ष्यो गोरक्षः सिद्धवन्दितः ।।
समस्त रस भोक्ता यो, यः सदा भोगवर्जित ।
सदा समरसो यश्च, श्री गोरक्षनमोऽस्तु ते ।।
हठ योग विधाता च, मत्स्यकीर्ति विवर्धनः ।
योग भिर्मनसा गभ्यः श्री गोरक्षनमोऽस्तु ते ।।
सिद्धानाञ्चमहासिद्धिः ऋषीणां च ऋषीश्वरः ।
योगिनाञ्चैव योगीन्द्रः श्री गोरक्ष नमोऽस्तुते ।।
विश्वतेजो विश्वरूपं विश्वन्द्य सदाशिवः ।
विश्वनामा विश्वनाथः श्री गोरक्ष नमोऽस्तुते ।।
अनन्तलोकनाथश्च, नाथ–नाथ शिरोमणिः ।
सर्वनाथ समाराध्यः, श्री गोरक्ष नमोऽस्तुते ।।
शून्यानां च परं शून्यं, परेषां परमेश्वरः ।
ध्यायताञ्च परं धाम श्री गोरक्ष नमोऽस्तुते ।।

*(कल्पद्रुमतंत्रान्तर्गत गोरक्षस्तोत्रराज)*

(हे गोरक्ष (गोरखनाथ) ! हजूर निरंजन, निराकार निर्विकार, निरामय, अगम्य, अगोचर, अलक्ष्य हुनुहुन्छ, सिद्धहरु हजूरको वन्दना गर्दछन्, हजूरलाई नमस्कार छ। हजूर समस्त रस भोक्ता भए पनि सदा भोगहरुबाट विरत हुनुहुन्छ । हजूर समरस हुनुहुन्छ, हजूरलाई नमस्कार छ। हजूर हठयोग प्रवर्तक (शिव) हुनुहुन्छ, आफ्ना गुरु मत्स्येन्द्रनाथको कीर्तिलाई बढाउने हुनुहुन्छ, योगीहरु मनमा हजूरको ध्यान गर्दछन्, हजूरलाई नमस्कार छ। हजूर सिद्धहरुमा महासिद्ध हुनुहुन्छ, ऋषिहरुमा ऋषिवर हुनुहुन्छ, योगीहरुमा योगेन्द्र हुनुहुन्छ, हजूरलाई नमस्कार छ। हजूर विश्वका प्रकाशक हुनुहुन्छ, विश्वरुप हुनुहुन्छ, विश्वद्वारा वन्द्य सदाशिव हुनुहुन्छ, हजूर विश्वनामधारी हुनुहुन्छ, विश्वनाथ हुनुहुन्छ, हजूरलाई नमस्कार छ । हजूर असंख्य लोकहरुका स्वामी हुनुहुन्छ, नाथहरुका नाथ शिरोमणि हुनुहुन्छ, समस्त नाथहरुद्वारा पूज्य (शिव) हुनुहुन्छ, हजूरलाई नमस्कार छ । हजूर शून्यहरुमा पनि परमशून्य हुनुहुन्छ, परमेश्वरहरुका पनि परमेश्वर हुनुहुन्छ, ध्यानीहरुका पनि ध्येय धाम (पद) हुनुहुन्छ, हजूरलाई नमस्कार छ ।

# नेपालको इतिहासमा श्री शिव गोरक्ष

- ‘आर्दश योगी’ नामक पुस्तकमा अक्षयकुमारले नेपालको इतिहासलाई आधार बनाई प्रचलित कथाअनुसार चौथौँ शताब्दीको अन्तिम समयतिर नेपालका बौद्ध राजा महीन्द्रदेवलाई पदच्यूत गरी गुरु गोरखनाथले आफ्ना शिष्य/सेवक वसन्तदेवलाई सिंहासनमा विराजमान गराउनुभएबाट गुरु गोरखनाथले चौथो शताब्दीमा नै कार्य गर्नुभएको प्रमाण भेटिन्छ । नेपालको इतिहासमा राजा नरेन्द्रदेवको पालामा गुरु गोरखनाथमाथि अनादर हुँदा बाह्र वर्षसम्म नागको आसन जमाई तपस्या गर्नुभएको कथा छ । राजा नरेन्द्रदेवको बारेमा स्पष्ट तिथिमिति नभए पनि यो घटना चौथौँदेखि आठौँ शताब्दीमा भएको हुनसक्ने अनुमान लगाउने थुप्रै प्रमाण छन् ।
- इतिहासअनुसार द्रव्य शाह (वि.सं. १६१६–१६२६) लाई गुरु गोरखनाथले १७ औँ शताब्दीको शुरुतिर आशीर्वाद दिई गोरखाको राजा बनाउनुभएको घटना पाइन्छ ।
- द्रव्य शाहपछिको चौथा राजा राम शाहलाई १७ औँ शताब्दीको अन्ततिर गुरु गोरखनाथले आशीर्वाद दिनुभएको ऐतिहासिक प्रमाण भेटिन्छ ।
- नेपालकै इतिहासमा द्रव्य शाहपछिका ११ औँ पुस्ताका राजा पृथ्वीनारायण शाहलाई अठारौँ शताब्दीमा आशीर्वाद दिनुभएको घटना उल्लेख छ ।
- नेपालको इतिहासमा छैटौँ शताब्दीमा नाथ सम्प्रदायको विकास भएको संकेत पाइन्छ । शकसंवत् ४५५ र वि.सं. ५९० को भस्मेश्वर अभिलेखमा ‘नाथेश्वर’ उल्लेख गरिएको छ । त्यस्तै शकसंवत् ४६९ अर्थात् वि.सं. ६०४ रामदेवको पालाको पशुपति मृगस्थली शिवलिङ्ग अभिलेखमा पनि ‘नाथेश्वर’को उल्लेख गरिएको छ । मृगस्थली गुरु गोरखनाथको तपस्थली भएको र यस्तो शब्दको प्रयोगले गुरु गोरखनाथले त्यतिबेला नै आफ्नो लीला देखाउनुभएको प्रष्ट हुन्छ ।
- जयस्थिति मल्लको ने.सं. ४९९ (वि.सं.१४३६) को ताम्रपत्रमा ‘देव गोरक्ष’को उल्लेख पाइन्छ । त्यस्तै नेपाल संवत् ५११ (वि.सं. १४४८) फर्पिङ अभिलेखमा ‘गोरक्ष पादुकाभ्यां नमः’ उल्लेख भएबाट पन्ध्रौँ शताब्दीमा नै गुरु गोरखनाथको प्रभाव परिसकेको बोध हुन्छ ।

# श्री शिव गोरक्ष महोत्सव

आध्यात्मिक शक्ति अनुसन्धान संस्था सिद्धाश्रम शक्ति केन्द्रले आध्यात्मिक शक्ति पुनर्जागरणका लागि गर्दै आइरहेका विभिन्न आध्यात्मिक क्रियाकलापहरूमध्ये 'शिव गोरक्ष महोत्सव' पनि एक हो । गोरक्ष निखिल युग स्थापनार्थ संस्थाबाट हुने प्रत्येक आध्यात्मिक गतिविधि परमपूज्य सद्गुरुदेवहरूको आदेशानुसार नै भइरहेका छन् । परमपूज्य सद्गुरुदेवहरूले प्रत्येक श्रावण महिनालाई शिव गोरक्षको रूपमा मनाउने भन्नु भएअनुसार हामीले प्रत्येक श्रावण महिनालाई 'शिव गोरक्ष महोत्सव'को रूपमा मनाउँदै आइरहेका छौँ ।

श्रावण महिना श्रावणी पर्वको महिनाको रूपमा पनि चिनिन्छ । यस महिनाभरि वेदवाचन गर्ने चलन पनि छ । यही महिनामा रक्षा बन्धन, ऋषिहरूको पूजा गर्ने पर्वहरू पर्दछन् । यस महिना 'शिव सिद्धि महिना' हो । श्रावण महिनाको प्रत्येक सोमबार व्रत बस्नाले हाम्रा सबै दुःख, कष्टहरू पनि सहजै हरण हुन्छन् र मनले चिताएको फल प्राप्त हुन्छ भन्ने जनविश्वास रहिआएको छ । श्रावण महिना भगवान् शिवको महिना हो । श्रावण महिनाभरि भगवान् शिव र उहाँका अवतारहरू क्रियाशील र भक्तवत्सल बन्नुहुन्छ । थोरै भक्ति गरे पनि भक्तले तत्काल भगवान् शिवको आशीर्वाद, वरदान प्राप्त गर्न सकिन्छ । यही सत्यताको आधारमा सिद्धाश्रम शक्ति केन्द्रले सद्गुरुदेवहरूकै निर्देशनमा श्रावण महिनामा शिव गोरक्ष महोत्सव मनाइरहेको छ ।

'श्री शिव गोरक्ष महोत्सव' हामी सबैको लागि नौलो शब्दावली (शिव+गोरक्ष) बन्दछ । वास्तवमा शिव र गोरक्ष शक्तिहरू मिलेर बनेको एउटै साझा शक्तिको उदाहरण हो शिव गोरक्ष महोत्सव । शिवका १०८ अवतारहरूमध्येको सबैभन्दा महत्त्वपूर्ण र चारै युगमा क्रियाशील एक मात्र अवतारको नाम हो गोरक्ष अवतार । पृथ्वीबासीलाई विपत्ति पर्दा भगवान् शिवले नै गोरक्ष अर्थात् गुरु गोरखनाथको रूपमा मनुष्यलाई सहयोग गर्नुहुन्छ । शिवमा रहेका सिद्धि, शक्तिहरू गोरक्षमा व्याप्त छन् भने गोरक्षमा अन्तर्निहित शक्तिहरू शिवमा छन् । शिवलाई प्रसन्न पार्नु भनेको गोरक्षनाथलाई प्रसन्न पार्नु हो, शिवलाई पूज्नु भनेको गोरक्षलाई पूज्नु हो । सम्पूर्ण शिवतत्त्व गुरुरूपी गोरक्षनाथको माध्यम भएर मात्र प्रवाहित हुन्छ । यसरी भगवान् शिव र गुरु गोरखनाथ एक आपसमा पर्याय भएकोले महोत्सवको नाम पनि शिव गोरक्ष महोत्सव रहन गएको हो ।

आध्यात्मिक धरातलमा शिव गोरक्ष वा सद्गुरु नै आध्यात्मिक शक्तिका आधार हुनुहुन्छ, केन्द्र हुनुहुन्छ । देवीदेवताहरू सद्गुरुकै निर्देशनमा आफ्ना भक्तहरूलाई आशीर्वाद, कृपा प्रदान गर्नुहुन्छ । शिव गोरक्षमा निहित शक्तिहरू श्रावण महिनामा ज्यादा चैतन्य र जाज्वल्यमान् हुन्छन् । शिव गोरक्षलाई उचित सम्मान दिन सकेमा, सद्गुरुको निर्देशनमा शिव गोरक्षको पूजा, आराधना, साधना गरेमा भक्तले सहजरूपमा नै यौगिक, लौकिक, अलौकिक, चमत्कारी ऊर्जाहरू प्राप्त गरेर भौतिक र आध्यात्मिक लाभ हासिल गर्न सक्छ ।

भनिन्छ, स्वयं ब्रह्मा शिवको कृपाले सृष्टिकर्ता हुनुभयो भने विष्णु भगवान् पालनकर्ता । भगवान्हरू त शम्भो सदाशिवको सान्निध्यको लागि लालायित हुन्छन् भने हामी मनुष्यहरूले शिवको नाम मात्र स्मरण गर्नु पनि सौभाग्यको कुरो हो । अझ त्यसमाथि पनि शिवस्वरूपका सद्गुरुदेवको मार्गनिर्देशनमा शिवको पर्व अर्थात् गोरक्ष महोत्सव मनाउन पाउनु सिद्धाश्रम शक्ति केन्द्र र समस्त शिष्यहरूको लागि नै गर्वको कुरा हो र आध्यात्मिक जागरणमा एउटा नौलो आयाम हो । परमपूज्य सद्गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज र श्री श्री महायोगी गुरु गोरखनाथ स्वयं शिव हुनुहुन्छ । शिव गोरक्ष अर्थात् गुरु गोरखनाथ आदि अनादि कालदेखि अजर, अमर योगीको रूपमा सर्वत्र पूजित हुनुहुन्छ । जब-जब सम्पूर्ण मानव समुदाय भय, डर, त्रासमा डुब्दछ तब-तब शिव गोरक्ष जाग्नुहुन्छ । यस्तो कुनै कालखण्ड वा नयाँ युगको विकास भएको छैन जुन गोरखनाथ बाबाको आशीर्वादले ओतप्रोत नभएको होस् । पुनः एकपटक सिद्धाश्रम शक्ति केन्द्रको माध्यमबाट गोरक्ष महोत्सवको रूपमा सारा मानवलाई पूज्यपादले जगाउने प्रयत्न गरिरहनुभएको छ । यस्ता परम वन्दनीय, परम आदरणीय शिवस्वरूप सद्गुरुदेवलाई एक महिना भए पनि मान सम्मान दिनु, उहाँलाई स्मरण गर्नु हामी सबैको पहिलो कर्तव्य हो किनभने परापूर्वकालदेखि नै नेपाल गोरक्षभूमि रहँदै आएको छ, यस देशको एकीकरण पनि गुरु गोरखनाथकै आशीर्वादबाट सम्भव भएको हो ।

वर्तमान समय जटिल एवं विषम छ, यस्तो विषम अवस्थामा आध्यात्मिक जागरण गर्नु सजिलो छैन तर आध्यात्मिक शक्तिबिना संसारको समाधान पनि छैन । त्यसैले, अजर, अमर, अविनाशी श्री शिव गोरक्षलाई उचित श्रद्धा, सम्मान दिऔं । पूज्यश्रीबाट प्रदत्त हरेक कार्यक्रममा सहभागी भएर नायाँ संसारको विकास गरौँ र यस वर्षको शिव गोरक्ष महोत्सवलाई भव्यरूपमा मनाऔँ । जय गुरुदेव !

# गोरखवाणीकै आत्मसात् किन ?

**दरवेस सोइ जो दर की जांणै ।**
**पंचे पवन अपूठां आंणै ॥**
**सदा सुचेत रहै दिन राति ।**
**सो दरवेस अलह की जाति ॥**

श्री शिव गोरक्षको कुनै पनि महावाणीलाई जीवनमा उतार्ने हो, व्यवहारमा ल्याउने हो भने, इमान्दारीपूर्वक आत्मसात् गर्ने हो भने जीवनको रूपान्तरण नहुने प्रश्नै उठ्दैन । हामी अहिलेसम्म दीनहीन अवस्थामा रहनुको एउटै कारण हो– आजसम्म हामीले उहाँको महावाणीलाई, उहाँको उपदेशलाई धेरै पढ्यौं, धेरै सुन्यौं तर त्यस पढाइ र सुनाइलाई व्यवहारमा लगाउन सकेनौं, जीवनमा उतार्न सकेनौं । हामीले पढेका र सुनेका कुराहरूलाई जति मात्रामा जीवनमा लगाउँछौं त्यति नै मात्रामा हाम्रो उत्थान हुन्छ । आजसम्म हामीले सूचना (Information) मात्र बटुलिरह्यौं– पुस्तकहरूबाट, ग्रन्थहरूबाट र सन्त-ऋषिहरूबाट र रूपान्तरण (Transformation) गरेनौं भने हाम्रो दशा पछिसम्म पनि यही दीनहीन रहिरहने कुरामा कुनै शंका छैन ।

माथिको गोरखवाणीले जीवको प्रमुख लक्ष्यलाई लक्षित गरेको छ । एउटा सच्चा सद्गुरुले मात्र जीवनको वास्तविक लक्ष्यलाई उजागर गर्न सक्नुहुन्छ । लक्ष्य धनपति हुने होइन, लक्ष्य विपुल सम्पत्ति थुपार्ने पनि हुनुहुन्न । ऐश-आराम पनि जीवनको लक्ष्य होइन । जीवनको लक्ष्य भन्नु त जीवनमा सम्पूर्ण विषय सुखप्रति दृढ वैराग्यता उत्पन्न गर्नु हो, परमात्माको प्रेमस्वरूपमा आफ्नो आत्मालाई एकाकार गर्नु, तदाकार गर्नु हो । परमात्मालाई बिर्सेर धनोपार्जन र अर्थोपार्जनमा मात्र जीवन बिताउनु बुद्धिमानी कदापि होइन । श्री शिव गोरक्षले आफ्नो महावाणीमा भन्नुभएको छ– महाज्योतिको साक्षात्कार गर्नको लागि पंचप्राण अपान, उदान, प्राण, व्यान र समानलाई नियन्त्रित गरी समस्त विषय-सुखप्रति पूर्ण वैराग्यलाई धारण गरी अनासक्त हुनुपर्दछ । यही अनासक्ति नै परमात्मातिर बढाउने बलियो आधार हो, हतियार हो, माध्यम हो । संसारमा आसक्ति रहेसम्म भगवान्मा पूर्ण प्रेम रहनै पाउँदैन । जब भगवान्मा पूर्ण प्रेम जाग्छ, भक्ति जाग्छ जब सांसारिक वासनामा हाम्रो मन रम्नै सक्दैन । यस कुराको हामीले ध्यान दिनुपर्दछ । प्रेमपूर्वक रातदिन साधक वा योगीले निरन्तर प्रियतम परमात्मको एकाग्र चित्तले ध्यान गर्दछ भने साधकमा पनि परमात्माको आकृतिको अभिव्यक्ति हुन लाग्दछ । यसरी साधक र परमात्मा दुवै प्रेमस्वरूप हुन जान्छ । यही स्वरूपमा नै परम कैवल्य पदको प्राप्ति हुन्छ, हाम्रो लागि परम सिद्धि हो यो । यस अवस्थाको प्राप्तिका लागि नै श्री शिव गोरक्षले आफ्नो प्रत्येक महावाणीमा हामीलाई संकेत गर्नुभएको छ, हामीलाई दिशा-निर्देश गर्नुभएको छ, हामीलाई बाटो देखाउनुभएको छ । त्यस दिशा-निर्देशलाई, त्यस बाटोलाई हामीले हल्कारूपमा लियौं, गम्भीररूपमा लिने यत्नसम्म पनि गरेनौं । जीवनलाई रूपान्तरण गर्न श्री शिव गोरक्षको महावाणीजस्तो अरू हुनै सक्तैन । आध्यात्मिक उत्थानका लागि स्वयं शिवको मार्गजस्तो अरू मार्ग हुन्छ नै कसरी ? सम्पूर्ण जीवको कल्याणका लागि महाकरुणामूर्ति श्री शिव गोरक्षले हामीलाई आफ्नो महावाणीबाट यति धेरै दिग्दर्शन गरिरहनुभएको छ कि हामीले त्यसलाई किंचित मात्र पनि भित्री हृदयदेखि ग्रहण गर्न सकिरहेका छैनौं । एउटा विषयमा होइन, जीवनका सबै विषयमा, सबै पाटामा, सबै क्षेत्रमा, सबैको विषयमा उहाँको उपदेशमा व्याख्या भएको छ, दिग्दर्शन भएको छ, चर्चा चलेको छ, प्रसङ्ग उठेको छ । तर हामीले ती कुरालाई नजरअन्दाज गरिदिएका छौं, राम्रोसँग बुझ्ने प्रयास गरेनौं, बुझेर, सम्झेर, सोचेर, गहिरिएर उहाँको उपदेशलाई हामीले जीवनमा लागू गरेनौं । हाम्रो पतनको कारण यही हो, हाम्रो दीनहीन अवस्थाको कारण यही हो ।

# नेपाल र भारतका

श्री श्री महायोगी गुरु गोरखनाथलाई श्री शिव गोरक्ष नामाकरण गर्ने परम्परा प्राचीनकालदेखि नै चलिआएको पाइन्छ । शिव योगेश्वर हुनुहुन्छ । नाथ सम्प्रदायमा उहाँले नै सबैभन्दा पहिले मत्स्येन्द्रनाथलाई उपदेशामृत प्रदान गर्नुभएको थियो । नाथ सम्प्रदायमा शिवले 'गोरख' रूपमा मत्स्येन्द्रनाथबाट महायोग ज्ञान पाउनुभएको थियो । त्यसैले उहाँलाई श्री शिव गोरक्ष भनिन्छ । गोरखनाथलाई नाथ दैवत मानिएको छ । निर्मल स्फटिकसमान  गौर शरीर, शिरमा जटा, तीन नेत्र श्री शिव गोरक्ष भाषाबाट रहित हुनुहुन्छ । उहाँ तत्त्वरूप हुनुहुन्छ, त्रिदेवस्वरूप हुनुहुन्छ । घटघटमा नाथ-परमशिवको रूपमा गोरखरूपमा विराजमान उहाँ समस्त जगत्का वन्दनीय श्री शिव गोरक्ष हुनुहुन्छ ।

शिवस्वरूप गोरक्षनाथले भक्तहरूप्रति अनुरक्त भएर योगानुशासनको उपदेश दिनुहुन्छ । आफ्नै जगत्गुरु स्वरूपशक्तियुक्त आदिनाथलाई नमस्कार गरेर गोरखनाथ सिद्ध सिद्धान्तको बयान गर्नुहुन्छ । नाथ सम्प्रदायमा गुरु गोरखनाथलाई कतै आदिनाथ शिव त कतै निराकार नाथब्रह्म भनिएको पाइन्छ । यही नाथब्रह्मको साकार स्वरूप आदिनाथ शिव हुनुहुन्छ र यही साकार आदिनाथ शिवको एउटा साकार पूर्ण योगीस्वरूप गोरखनाथ हो । यसैले उहाँलाई श्री शिव गोरक्ष भनिन्छ ।

यद्यपि श्री शिव गोरक्ष नै श्री नाथ हुनुहुन्छ तर पनि व्यवहारमा महायोगज्ञान प्रतिष्ठाका लागि उहाँले गोरखनाथको रूपमा मत्स्येन्द्रनाथबाट योग उपदेश प्राप्त गर्नुभयो । गोरखवाणीको एउटा सबदीका अनुसार शिवस्वरूप भएर पनि श्री शिव गोरक्षको रूपमा उहाँले मत्स्येन्द्रनाथबाट योगोपदेश प्राप्त गर्नुभयो ।

नेपालको विभिन्न स्थानमा श्री शिव गोरक्षका मठ, मन्दिर, पीठहरू रहेका छन् । ऐतिहासिक जिल्ला गोरखास्थित गोरख गुफा दिव्य अग्रणी पूज्यस्थलहरूमध्ये एक हो । श्री शिव गोरक्षको प्रथम प्राकट्य यही ठाउँमा भएको हो । सिद्धाश्रम शक्ति केन्द्रले यस ठाउँमा प्रत्येक वर्ष वैशाखी पूर्णिमादेखि शुरु गरेर लगातार एघार दिनसम्म श्री शिव गोरक्षको चरणमा सवालाख रोट अर्पण महोत्सव आयोजना गरिरहेको पनि छपटक भइसकेको छ । यहाँ के राजा, महाराजा, के सर्वसाधारण, सबैले उहाँको चरणकमलमा रोट चढाउने परम्परा रहेको छ ।

काठमाडौँको पशुपति मृगस्थलीमा रहेको गोरख मन्दिर अग्रणी पूज्य स्थलहरूमध्येको अर्को मन्दिरमा गनिन्छ ।

जीवनमा कैवल्यजस्तो महान पद अरू हुनै सक्दैन, प्रेमस्वरूपमा डुबुल्की मार्नुजस्तो आनन्द अन्य हुनै सक्तैन । जीवनको दुरुह धापबाट निस्केर आवागमनबाट जोगिने एउटै बाटो श्री शिव गोरक्षको महावाणीलाई जीवनमा उतार्नु हो, उहाँले देखाउनुभएको बाटोबाट हिँड्नु हो । उहाँले देखाउनुभएको बाटोबाट हिँड्नाले, उहाँले चित्रित गर्नुभएको गन्तव्य पहिल्याउनाले र उहाँको उपदेशलाई आत्मसात् गर्नाले कैवल्य पदमा स्थिर रहन सकिन्छ, यही नै पूर्ण सिद्धि हो । योगीले सहस्रारमा स्थित अलख निरंजन परब्रह्म कुण्डलिनी महाशक्तिको जागरणद्वारा साक्षात्कार गरेको हुन्छ, यसप्रकार साधकले साहसपूर्वक साधनागत विघ्न-बाधा र प्रतिकूल स्थितिमा विजय प्राप्त गर्दै शरीरलाई एकरसमा स्थिर राख्न सक्दछन् । श्री शिव गोरक्षले यस्तै व्यक्तिलाई वीर भन्नुभएको छ । यस्ता परमात्मा परब्रह्म अलख निरंजन, शून्य गगनस्थ अमृत ब्रह्मको सहज साक्षात्कार, स्वरूपको बोधपुरुष श्री शिव गोरक्षले उहाँको स्वरूपमा आभ्यन्तर साधनामा सावधान हुनुपर्दछ भन्ने उपदेश दिनुहुन्छ ।

उहाँले हामीलाई मात्रै होइन, भर्तुहरिलाई पनि योगोपदेश दिनुभएको छ– हे भर्तुहरि ! प्राणायामको माध्यमबाट नाडीहरूको मलशोधन गरी चित्तवृत्तिलाई निरुद्ध गरी नाद-विन्दुको साधनामा तत्पर हुनुपर्छ । यसप्रकार नाद-विन्दुको साधनामा निरन्तर तत्पर भई एकान्तमा निवास गरी अथवा सहज शून्य गगनस्थ सहस्रारमा आत्माको लय गराई सिद्धावस्थामा रमण गर्नुपर्दछ ।

भर्तृहरि र हामीमा तुलना हुनै सक्तैन । उहाँ ब्रह्मज्ञानी, हामी साधारण जीव ! ब्रह्मज्ञानीसम्मलाई उपदेश दिनसक्ने व्यक्तित्व श्री शिव गोरक्ष हुनुहुन्छ, साक्षात् परब्रह्म हुनुहुन्छ, साक्षात् परमात्मा हुनुहुन्छ । त्यसैले एउटा ब्रह्मज्ञानी त श्री शिव गोरक्षको उपदेशलाई लिएर परब्रह्मस्वरूपमा स्थित हुन अघि बढ्छन् भने हामी साधारण अल्पबुद्धि जीव उहाँको उपदेशलाई ग्रहण गरेर अघि बढ्नमा पछाडि पर्नु हुँदैन । जति हामी द्रुत गतिमा उहाँले देखाउनुभएको बाटोमा हिँड्नेछौँ त्यति चाँडै नै हाम्रो उत्थान सम्भव हुन्छ । श्री शिव गोरक्षको कृपाले, अनुकम्पाले, आशीर्वादले हामीले सदा उहाँको उपदेशलाई हृदयङ्गम गर्न सकौँ, सदा आफ्नो जीवनमा लगाउन सकौँ, व्यवहारमा उतार्न सकौँ र अन्तमा कैवल्य पदमा स्थित हुन सकौँ । यथार्थमा कैवल्य पद श्री शिव गोरक्षको शाश्वत् स्वरूप हो ।

जय गुरुदेव !

# प्रसिद्ध गोरक्ष मन्दिरहरु

शिखर शैलीको यस भव्य मन्दिर १६२ वर्ष पुरानो हो भन्ने विश्वास रहेको छ । नरेन्द्रदेव मल्लको पालामा बनाइएको यस मन्दिरभित्र श्री शिव गोरक्षको पादुका राखिएको छ । मन्दिरपछाडि श्री मत्स्येन्द्रनाथको श्वेत मूर्ति देख्न सकिन्छ ।

ऐतिहासिक शहर काठमाडौँको मुटुमा अवस्थित मरुटोलमा रहेको काष्ठमण्डप पनि श्री शिव गोरक्षका भक्तहरूका लागि श्रद्धाको स्थान भएर रहेको छ । मरुसत्तल भनेर पनि चिनिने काष्ठमण्डपभित्र श्री शिव गोरक्षको मूर्ति स्थापना गरिएको छ । काठमाडौँकै अर्को प्रसिद्ध ठाउँ इन्द्रचोकको आकाश भैरव मन्दिरको पूर्वतिर श्री शिव गोरक्षको मूर्ति देख्न पाइन्छ । श्री शिव गोरक्षको मूर्तिसँगै अन्य मूर्तिहरू पनि देख्न सकिने यो ठाउँमा पहिले मन्दिर रहे पनि त्यो भत्किएको स्थानीयबासीहरू बताउनुहुन्छ । ललितपुरको शंखमूलमा रहेको सैँथु गणेशनिर रहेको श्री शिव गोरक्षको मन्दिरभित्र पनि झण्डै सवा एक हात अग्लो र करिब एक हात चौडा मूर्ति देख्न सकिन्छ । मन्दिरभित्र श्री शिव गोरक्षको चोइटिइसकेको पादुकाको अवशेष पनि देख्न सकिन्छ । त्यस्तै, भक्तपुरको तलांदफो टोलमा अलि अग्लो ढिस्कोमा श्री शिव गोरक्षको पादुका रहेको मन्दिर छ । नरसिंह मन्दिर परिसरबाट सिँढी चढेर माथि पुगेपछि दुईवटा देवलमध्ये एउटा भगवान् गणेशको हो भने अर्को तोरणसहितको पादुका रहेको श्री शिव गोरक्षको हो ।

दाङको सदरमुकाम घोराहीदेखि करिब दुई कि.मी. पूर्व-दक्षिण जिल्लाको बीच भागमा पूर्वमा सिस्ने र पश्चिममा कटुवा खोलाको दोभानमा अवस्थित चौघेराको गोरक्ष-रत्ननाथ मन्दिर रत्ननाथले श्री शिव गोरक्षको पात्र स्थापना गरी निर्माण गर्नुभएको हो । शिखर शैलीमा निर्मित यो मन्दिर बनाउने रतननाथ श्री शिव गोरक्षका शिष्य र थारु समाजका कुलदेवता हुनुहुन्छ । मूल मन्दिरको दायाँतर्फको कक्षमा श्री शिव गोरक्षका चरण पादुका एवं अमृतमय पात्रदेवता र बायाँतर्फको कक्षमा कालभैरवका मूर्तिहरू रहेका छन् । पात्र देवताको स्थापनादेखि नै मन्दिरमा अखण्ड धुनी प्रज्ज्वलित भइरहेको छ ।

काठमाडौँको पशुपति वनकालीनिरको मन्दिरभित्र रहेको श्री शिव गोरक्षको श्रीमूर्ति पनि दर्शनीय मूर्तिहरूमध्ये एक मानिन्छ । काठमाडौँकै हनुमानढोका दरवार परिसर, कमलपोखरीबाट करिब १ किलोमिटर पूर्व रहेको मन्दिर तथा पनौतीमा पनि श्री शिव गोरक्षका पादुका रहेका छन् भने गुरु गोरखनाथको पादुकालाई गोसाइँकुण्ड यात्रा गराउने लिच्छविकालीन परम्परालाई आजसम्म पनि

नेपालमा नाथयोगीहरूले निरन्तरता दिइरहेका छन् । गुरु गोरखनाथको पादुकालाई काठमाडौं मृगस्थली, गोरक्ष मठबाट चाँदीको डण्डाको साथमा झल्लरीको छाता ओढाई काठमाडौँ हनुमानढोका पीर मठमा लगेर विशेष हवन, पूजन र पात्र देवतालाई जगाइने परम्परा रहेको छ । उक्त पादुका काठमाडौँबाट रानीपौवा, ढिकुरे, धैवुङ्ग, धुन्चे, चन्दनबारी हुँदै गोसाइँकुण्डसम्म पैदल यात्रा गरेर लगिन्छ । जनै पूर्णिमाको विशाल मेला गोसाइँकुण्डमा हुने र उक्त मेलामा तीर्थालुहरूले श्री शिव गोरक्षको पादुका दर्शन गरी गोसाइँकुण्डमा स्नान गर्दछन् । यसबाट सुख, शान्तिका साथै शिव गोरक्ष लोक प्राप्त हुन्छ भन्ने विश्वास रहेको छ ।

राजधानीको दक्षिणमा पर्ने फर्पिङको शेषनारायणमा रहेको बौद्ध गुम्बाभन्दा केही माथि भन्ज्याङ उक्लेपछि श्री शिव गोरक्ष पादुका रहेको मन्दिरमा पुग्न सकिन्छ । एउटा लामो ढुङ्गाबाट बनेको यहाँको पादुकाको वरिपरि गदा, शङ्खअङ्कित चित्र कुँदिएका छन् र ढुङ्गामा कुँदिएका कमलको फूलमाथि पादुका रहेको छ । यो पादुका जमिनबाट अन्दाजी १ मिटरको उचाइमा रहेको छ र पादुकालाई गजुर शैलीमा निर्मित मन्दिरमा राखिएको छ । कसैले यस पादुकाको स्थापना प्रताप मल्ल अथवा जयस्थिति मल्लले गराएको भन्ने गर्दछन् भने कसैले दक्षिणकालीको उत्पत्ति हुँदा नै पादुकाको पनि स्थापना गरिएको हो भन्ने विश्वास गर्दछन् ।

त्यस्तै, भारतमा नाथ सम्प्रदायको प्रयाग (त्रिवेणी), काशी, अयोध्या, गोदावरीको उद्‌गम त्रिम्बिक, द्वारका, हरिद्वार, बद्रीनाथ, केदारनाथ, वृन्दावन, पुष्कर, रामेश्वर, दार्जिलिङ्ग, आसाम, कश्मीरमा अमरनाथ, पश्चिममा हिंगलाज मन्दिर पवित्र एवं पूज्य स्थल हुन् । त्यस्तै, सियालकोट, बतरा, टकसाल, लाहौर, अमृतसर, बोहर, किरान, पंजाबको टिला, नगर इत्यादि नाथ योगीहरूका लागि पवित्र स्थान हुन् । अलमोडामा भैरव पार्वतीका अतिरिक्त अत्यन्तै ठूलो कुण्डल धारण गर्नुभएको गोरखनाथको एक फुट उचाइको मूर्ति रहेको छ । नैनीतालमा रहेको नन्दीदेवीको मन्दिरनिर एउटा भैरवको मन्दिर पनि देख्न सकिन्छ । त्यहाँ नाथ योगीहरूको आवागमन हुन्छ । जय गुरुदेव !

*(स्रोत : गोरक्ष निखिल वाणी, गोरखनाथ चरित्र । मठ, मन्दिरहरूको पूर्ण विवरणका लागि गोरक्ष निखिल वाणीका पुराना अंकहरू हेर्न आग्रह गरिन्छ ।)*

# श्री शिव गोरक्ष प्रणीत हठयोग

श्री श्री महायोगी गुरु गोरखनाथद्वारा उपदिष्ट योगमार्ग भक्ति आन्दोलनपूर्वको सर्वाधिक शक्तिशाली धार्मिक आन्दोलन थियो । महायोगी गुरु गोरखनाथ आफ्ना युगका पुरुषोत्तम हुनुहुन्थ्यो । पारसमणिजस्तै उहाँले जुन धातुलाई स्पर्श गर्नुभयो त्यही सुन बन्न पुग्यो । महायोगी गुरु गोरखनाथको जीवन-दर्शन अन्यन्तै दुरुह र जटिल तथ्यहरूबाट पूर्ण छ । नि:सन्देह महायोगी गुरु गोरखनाथ अत्यन्तै प्रभावशाली व्यक्तित्वका स्वामी हुनुहुन्थ्यो । उहाँ सौन्दर्य, ऐश्वर्य तथा माधुर्यका दिव्य योगमूर्ति हुनुहुन्थ्यो । शिरमा जटा, निधारमा भस्मले विभूषित उहाँको व्यक्तित्व भव्य थियो । उहाँको शरीर सुगठित, स्वच्छ र कल्मषहीन थियो । उहाँ धैर्यवान् र शान्त प्रकृतिका अलौकिक व्यक्तित्व हुनुहुन्थ्यो । उहाँ माया-मोहबाट पर हुनुहुन्थ्यो । अभावग्रस्त प्राणीहरूप्रति उहाँको मनमा सहज करुणा थियो । समकालीन समाजमा उहाँले आफ्नो व्यक्तिगत प्रभाव एवं गुरुत्तर प्रयत्नले जनमानसमा विशेष स्थान बनाउनुभएको थियो । उहाँमा धनी-गरीब, तल-माथि, ब्राह्मण-शूद्र, बौद्ध-जैनको भेद थिएन ।

योगका दुई प्रमुख पद्धतिहरू राजयोग र हठयोगका प्रवर्तक गुरु गोरखनाथ हुनुहुन्छ । शास्त्रहरूमा हठयोग साधारणत: प्राणनिरोधप्रधान साधनालाई मानिन्छ । 'हठ'मा 'ह' शब्दको अर्थ सूर्य र 'ठ' शब्दको अर्थ चन्द्र हो । यी दुवैको योग हठ हो । सूर्य प्राणवायु हो र चन्द्र अपान वायु । यी दुवैको योग गर्नु अर्थात् प्राणायामद्वारा वायुको निरोध गर्नु हठयोग हो । हठयोगद्वारा साधकले आफ्नो भौतिक शरीरलाई शुद्ध गरेर दिव्य आत्माको साक्षात्कारको आश्रय बन्न सक्दछ । यसबाट कुण्डलिनी शक्ति जागेर सहस्रारमा पुग्दछ । भौतिक शरीरको त्यस स्थान शुद्ध हुन हठयोगका ती क्रियामा निर्भर छ जसले स्वस्थ शरीरलाई दोषग्रस्त हुन दिँदैनन् तथा अस्वस्थ शरीरलाई स्वस्थ बनाउन सक्दछन् । हठयोगको प्रमुख सिद्धान्त यो हो कि मानव शरीर यन्त्रजस्तै छ जसको गतिविधिको संचालन आत्माले गर्दछ र त्यस आत्माको शक्तिको रूपमा विद्यमान छन्– अन्त:करण, मन, बुद्धि, अहंकार आदि अवयव । यी अवयवहरू स्नायु र ग्रन्थिहरूद्वारा आफ्नो कार्यसंचालन गर्न समर्थ हुन्छन् । यदि ती स्नायुले आ-आफ्ना कार्य सहजरूपमा गर्दछन् र ती नियमित छन् भने हामीले आफ्नो शरीरमा प्रतिष्ठित आत्माको दर्शन गर्न नसक्ने कुनै कारण छैन । यदि हाम्रो शरीरस्थ यन्त्रहरूको क्रिया स्वाभाविक छैन भने यसबाट शारीरिक तथा मानसिक दुवै दृष्टिबाट स्वास्थ्यको ह्रास हुन लाग्दछ र यस अवस्थामा सात्त्विक वृत्तिहरू पनि बिस्तारै पलायन हुन लाग्दछन्, पाशविक वृत्तिले आधिपत्य जमाउन लाग्दछ, क्रोध, चिड्चिडेपना, सत्यसँग विरोध आदिको प्रवृत्ति बढ्न लाग्दछ जसबाट मनुष्यको सहनशीलता नष्ट हुन जान्छ ।

हठयोग दुई प्रकारका हुन्छन्– लय योग र स्वरोदय योग । लय योगमा मानसिक एकाग्रता हुन्छ र स्वरोदय योगमा वायु र नाडीहरूको नियन्त्रणको ज्ञान हुन जान्छ । हाम्रो शरीरमा स्थित बहत्तर हजार नाडीहरूमा इडा, पिङ्गला र सुषुम्ना तीन नाडीहरू प्रमुख छन् । यिनीहरूमाथिको नियन्त्रणको अभ्यास हुनाले निर्विकारता र आत्मदर्शनको उपलब्धि सुलभ हुन्छ ।

मानव शरीरमा छ चक्रको विद्यमानता छ– मूलाधार, स्वाधिष्ठान, मणिपूर, अनाहत, विशुद्ध र आज्ञाचक्र । मणिपूर नाभिमूलमा, अनाहत हृदयमा, विशुद्ध चक्र कण्ठमा र आज्ञा चक्र आँखीभौँको मध्यमा छ । यी चक्रहरूको भेदनबाट शरीरमा अद्भुत सामर्थ्य भरिन्छ । यिनीहरूको भेदन कुण्डलिनीलाई जगाउनाले नै सम्भव हुन्छ, यो हठयोगको क्रियाबाट मात्र सिद्ध हुन्छ । कुण्डलिनी नै जीवनी शक्ति हो । जब यो सुप्तावस्थामा रहन्छ तब मानिसमा अल्पशक्ति रहन्छ । यसको जगरणमा नै अतुल सामर्थ्य उत्पन्न हुन्छ, यसबाट मनुष्य दिव्य भावले युक्त हुन्छ । स्वरोदय योगद्वारा जुन स्वर ज्ञानको उपलब्धि हुन्छ, त्यसमा मानिसले आफ्नो भूत, भविष्य र वर्तमान तीनै कालको विषयमा पूर्ण जानकारी प्राप्त गर्दछ । उसलाई भविष्यमा घट्ने घटनाको पहिले नै जानकारी हुन जान्छ । यसबाट ऊ दुर्घटना आदिबाट आफ्नो रक्षा गर्न समर्थ हुन्छ । श्रेष्ठ स्वरको ज्ञानबाट उत्तम स्वरको संचालन गरेर बिग्रेको कार्यलाई सुधार गर्दछ । हठयोगका यी दुवै अङ्ग मानवका लागि अत्यन्तै कल्याणकारी छन् । यसमा भौतिक तथा पारलौकिक दुवै किसिमको सुखको सिद्धि मिल्दछ । जसरी पृथ्वीलाई चेतना र क्रियाशक्तिको प्राप्ति उत्तरी-दक्षिणी ध्रुवहरूबाट हुन्छ, त्यसरी नै मानव शरीरमा दुई अत्यन्त सूक्ष्मशक्ति-संस्थान ब्रह्मरन्ध्र र सुषुप्नाको रूपमा विद्यमान छन् । ब्रह्मरन्धमा सहस्रार पद्म र सुषुप्ना-संस्थानमा कुण्डलिनी शक्ति सुतिरहेको हुन्छ । सहस्रारको शिव (महासर्प) र सुषुप्ना-संस्थानको कुण्डलिनी शक्ति (महासर्पिणी) को मिलनबाट नै मनुष्यको जीवन आनन्दमय र दिव्य हुन जान्छ, आफै नै ब्रह्मकुण्डको चेतना अभिव्यक्त हुन जान्छ । मूलाधारमा सुतेर बसेको कुण्डलिनीलाई जगाउन गरिने योगक्रियाले सबै रोगहरूलाई शमन गर्दछ । ब्रह्माण्डको व्यापक गठनमा जुन त्रैलोक्यको व्याप्ती मानिएको छ त्यो मनुष्यको शरीरमा पनि विद्यमान छ । मनुष्यको शरीर पनि व्यापक ब्रह्माण्डको एउटा सानो रूप हो । पञ्चभूतमा आकाशले समस्त ब्रह्माण्डलाई सत्त्वगुणको सहयोगले धारण गरेजस्तै धरतीरूप लघु ब्रह्माण्डलाई पनि धारण गर्दछ । जय गुरुदेव !

# श्री सावर संरचना शक्ति केन्द्र र प्रकाशित कृतिहरु

संसारमा स्थूलरूपका संगठन भएजस्तै सूक्ष्मरूपका संस्था र संगठनहरू पनि छन् । स्थूलरूपमा नदेखिने हुनाले यस्ता सूक्ष्म संगठनहरूलाई अधिकांश मानिसहरू काल्पनिक ठान्दछन् । ध्यानको गहिराइ र सूक्ष्म सत्तामा विराजमान योगी, महायोगी, देवीदेवताहरूको कृपा, अनुकम्पाबाट यस्ता सूक्ष्म संगठनहरूसँग तादात्म्यता स्थापित गर्न सकिन्छ । सिद्धाश्रम शक्ति केन्द्रसँग यसरी नै तादात्म्यता रहेका सूक्ष्म संगठनहरूमध्ये एउटाको नाम हो– श्री सावर संरचना शक्ति केन्द्र । नाथहरूका महानाथ श्री श्री महायोगी गुरु गोरखनाथ (श्री शिव गोरक्ष) ले सम्पूर्ण नाथ योगी एवं सम्पूर्ण सावर योगीहरूलाई एउटै छातामुनि राख्न र सांगठनिकरूपमा बलियो र सशक्तरूपमा आत्मिक एकता गर्न सृजना गर्नुभएको परिवार श्री सावर संरचना केन्द्र हो । यो संगठन सूक्ष्मतामा श्री शिव गोरक्षसँग प्रत्यक्ष सम्बन्ध राखेको संस्था हो । यो संस्था उहाँकै आशीर्वादको फलस्वरूप स्थापित संस्था हो ।

यो संस्था हजारौँ वर्ष तपस्यारत योगीहरूको, सिद्धहरूको, तान्त्रिक, मान्त्रिक, तपस्वीहरूको मूलाधार हो, मेरुदण्ड हो । दिव्यतम सिद्धात्माहरूको आत्मिक परिवारको रूपमा रहेको यो केन्द्र श्री शिव गोरक्षको तपोबलले सिर्जिएको अनुपम केन्द्र हो । यहाँ हजारौँ वर्ष तपस्यारत सिद्ध, योगी, महायोगीहरूको बाहुल्यता छ ।

श्री शिव गोरक्ष सम्पूर्ण सिद्धि शक्तिका मालिक हुनुहुन्छ । उहाँ सृष्टिका मूलाधार, अगम्य, अगोचर, अलक्ष्य, निरञ्जन, निराकार, निर्विकल्प, निरामय, अलख निरञ्जन, परब्रह्म परमात्मा सकल अनन्तकोटि ब्रह्माण्डका मालिक, योगीहरूका महायोगी, नाथहरूका महानाथ, हठयोगप्रवर्तक, सिद्धहरूमा महासिद्ध, ऋषिहरूमा ऋषिवर, योगीहरूमा योगेन्द्र, विश्वका प्रकाशक, विश्वरूप, विश्वद्वारा वन्द्य सदाशिव, विश्वनामधारी, विश्वनाथ, नाथहरूका नाथ शिरोमणि, समस्त नाथहरूद्वारा पूज्य, शून्यहरूमा पनि परमशून्य, परमेश्वरहरूका पनि परमेश्वर, ध्यानीहरूका पनि ध्येय धाम (पद) हुनुहुन्छ । उहाँकै इशारामा सारा सृष्टि चलिरहेको छ । उहाँकै कृपाबाट ब्रह्मा, विष्णु, महेश्वरले सृष्टि परम्परालाई व्यवस्थितरूपमा अघि बढाइरहनु भएको छ ।

हरेक युगमा गोरक्ष शक्तिको जागरणसँगै अवतार शृंखलाले धर्म र सत्यताको रक्षा गर्दै सद्गुरुको उच्चता, गरिमालाई समाजसमक्ष उजागर गर्दै आइरहेको कुरामा शास्त्र र समाज साक्षी छन् । हरेक युगमा र आवश्यकताअनुसार प्रत्येक शताब्दीमा श्री शिव गोरक्षको कृपा प्राप्त सावर संरचनाले कार्य गरिरहेको छ । श्री शिव गोरक्षको सांगठनिक सूत्रशैली आफैमा अद्भुत छ, रहस्यमय छ । यही अद्भुत एवं अनुपम सांगठनिक स्वरूपभित्र लाखौँ योगी, स्वामी, ऋषिमुनि, तपस्वी, देवीदेवता आदि समेटिएका छन्, सजिएका छन् र सुन्दर सृष्टि चलाइरहेका छन् ।

श्री शिव गोरक्ष सावर मन्त्रका प्रणेता हुनुहुन्छ । अजर, अमर कायायुक्त श्री शिव गोरक्षको अद्वितीय व्यक्तित्व, विराट्

संगठनशैली एवं सावर मन्त्रका दिव्यताभित्रबाट सिद्धहरू जन्मने गर्दछन् । प्रत्येक मनुष्यले आफूलाई पूर्णतामा लैजाने आत्मिक यात्रामा नै अगाडि बढिरहेको हुन्छ । पूर्णताको अर्थ, मोक्षको अर्थ केवल हामीले बुझिरहेका, शास्त्रमा उल्लेख गरिएका विषयभित्र मात्रै सीमित छैन । व्यक्तिले हासिल गर्ने उच्चताभित्रबाट मात्रै यी विषयहरूको उजागर हुने हो । त्यसैले पनि यस्ता गूढ कुराहरूसमेत समाजलाई बुझाउने प्रयास-प्रयत्न भइरहेको हुन्छ ।

सावर संरचना शक्ति केन्द्र चर्चाको परिधिभित्र समेट्न सकिने संरचना पनि होइन । दिव्यतम सिद्धहरूको, दिव्य नाथ योगीहरूको बाहुल्यता रहेको यस संरचनाको एक इशारामा संसारले नै कायाकल्प प्राप्ति गर्न सक्दछ । यस्ता दिव्यतम योगीहरूलाई विभिन्न रूपबाट श्री शिव गोरक्षले समेटेर सुव्यवस्थित पाराबाट झुण्डझुण्डको रूपमा अनन्त ब्रह्माण्डमा क्रियाशील गराउनुभएका शक्तिहरूलाई नै श्री सावर संरचना शक्ति केन्द्रको रूपमा बुझ्न सक्छौं ।

अत्यन्तै दिव्यतम, उच्च धरोहरको रूपमा रहेको सावर लोकका संरक्षक श्री शिव गोरक्षको एक इशारामा जस्तोसुकै कार्य गर्न पनि तयार हुने दिव्यतम नाथ योगीहरू, सावर योगीहरू, ऋषिमुनि, देवीदेवताहरू आदिको समूहलाई लौकिक भाषामा श्री सावर संरचना शक्ति केन्द्र भनेर बुझ्न सकिन्छ ।

जुन समयमा धर्म र अध्यात्ममाथि प्रश्नचिह्न उठाइन्छ, सद्गुरुदेवमाथि अनादर गरिन्छ, दानवी शक्तिको बोलवाला हुन थाल्दछ, तब तब श्री शिव गोरक्षनाथको दृष्टिसँगै श्री सावर संरचना शक्ति केन्द्रले आफ्नो कार्यको थालनी गर्दछ । यसै शृंखलाको एउटा कडी बनेर पृथ्वीबासीहरूलाई सत्यता र धर्मको पाठ सिकाउँदै अध्यात्मका गूढ कुरा बुझाउँदै सद्गुरुको महिमा गाउन, उच्चता र दिव्यता बुझाउन पृथ्वीतटमा पनि सावर संरचनाले आफ्नो दृष्टि पुऱ्याएको छ । यसैअनुरूप नेपालमा पनि श्री सावर संरचना शक्ति केन्द्र नेपाल भनी सूक्ष्मताबाट आधिकारिकता प्राप्त गरी विभिन्न दिव्य कार्यक्रमहरू सञ्चालनका साथ अगाडि बढिरहेको छ । यसमा थुप्रै समूहहरू छन्, अर्थात् सिद्धहरूको जमात छ जो आवश्यकताअनुरूप पृथ्वीतटमा आई कार्य गरी-गराई पुन: फर्कने गर्दछन् । यस्तै समूहहरूमा पर्दछन्– बत्रिचिड, कणी, कालीमाण, साणोपाई, सात्री, गोहनाश्री आदि जसले पृथ्वीतटमा आई कार्य गरिसकेका छन् ।

यसरी सिद्धहरू, योगी, महायोगीहरू, ऋषिमुनिहरू पनि यस संरचनामा रही कार्य गर्न लालायित हुन्छन्, यसैलाई आफ्नो परम सौभाग्य ठान्ने गर्दछन् । कुनै संघ, सम्प्रदाय, धर्मभित्रको दायराभन्दा धेरै माथि जहाँ पुग्ने सबैको इच्छा, चाहना, प्रयास, प्रयत्न हुने गर्दछ, यस्तो दिव्यतम संरचनाको वर्णन एवं परिचय दिन खोज्नु केवल मूर्खता मात्र हुनेछ ।

## श्री सावर संरचना शक्ति केन्द्र, नेपालबाट हालसम्म प्रकाशित कृतिहरू–

### महायोगीहरुको परिचय

श्री सावर संरचना शक्ति केन्द्र, नेपालको पहिलो ग्रन्थरत्नको रूपमा प्रकाशित 'महायोगीहरूको परिचय' वि.सं. २०६२, जेठ ९ गते सोमबार गोरक्ष प्रकट दिवसको पावन अवसरमा गुरु चरणार्पणपश्चात् लोकार्पण गरिएको थियो । योगी शिवशक्तिश्वरानन्द र योगी कर्मवीरानन्दद्वयले लेख्नुभएको यस ग्रन्थरत्नमा श्री श्री महायोगी गुरु गोरखनाथ एवं महायोगी परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको सम्बन्धमा वृहत्रूपमा व्याख्या भएको छ । ग्रन्थरत्नको प्रथम खण्डमा श्री श्री महायोगी गुरु गोरखनाथ र दोस्रो खण्डमा महायोगी परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको सम्बन्धमा सांगोपांग चर्चा भएको छ । महायोगीद्वयको उत्पत्ति-अवतरण प्रकरण, व्यक्तित्व, स्वरूप, उहाँहरूप्रतिको अन्य सम्प्रदायको दृष्टिकोण, उहाँहरूबाट विरचित ग्रन्थहरू आदिका बारेमा यस ग्रन्थरत्नमा चर्चा पाइन्छ ।

### श्री शिव गोरक्ष–नाथंप्रदाय

योगी शिवशक्तिश्वरानन्द र योगी कर्मवीरानन्दद्वारा लिखित यो ग्रन्थ श्री सावर संरचना केन्द्र, नेपालबाट प्रकाशित दोस्रो ग्रन्थरत्न हो । वि.सं. २०६२ सालको श्रावण महिनामा प्रथम संस्करण प्रकाशित भएको यस ग्रन्थरत्नमा श्री शिव गोरक्षसम्बन्धी सत्य-तथ्य कुराहरूलाई पाठकसामु ल्याउने जमर्को भएको छ । विभिन्न विद्वान्हरूबीच श्री शिव गोरक्षसम्बन्धी विरोधाभासपूर्ण कुराहरू रहेको सन्दर्भमा यस ग्रन्थरत्नले ती विरोधाभासहरूलाई हटाउन धेरै टेवा पुऱ्याएको महसुस गरिएको छ । यस ग्रन्थरत्नले श्री शिव गोरक्ष, नाथ पन्थ र यससँग सम्बन्धित विभिन्न व्यक्तित्वहरू, नवनाथ, चौरासीनाथ, नाथ योगीहरूको चिनारीलाई सविस्तार व्याख्या गरेको छ ।

### मन्त्र साधना–ऊर्ध्वसंगति

समाजमा खट्केका विभिन्न विषयहरूमध्ये मानव जीवनलाई पूर्णतामा लैजानका लागि यस ग्रन्थको भूमिका सशक्त रहेको छ । श्री सावर संरचना शक्ति केन्द्रको तेस्रो ग्रन्थको रूपमा प्रकाशित यस ग्रन्थरत्नको प्रकाशन २०६३ साल वैशाखी पूर्णिमामा भएको हो । श्री शिव गोरक्ष प्रकट दिवसको पावन अवसरमा प्रकाशित यस ग्रन्थरत्नका लेखक योगीद्वय शिवशक्तिश्वरानन्द र कर्मवीरानन्द हुनुहुन्छ ।

साधना मानव जीवनको उच्चतम धरोहर हो । एउटा सामान्य व्यक्ति साधनाकै बलबाट सफल तपस्वीको रूपमा, योगी, स्वामी, सिद्धको रूपमा रूपान्तरण हुने गर्दछ । साधना मानव जीवनलाई उच्चतामा पुऱ्याउने दिव्यतम माध्यम पनि हो । यसै साधनाको विषयमा यस ग्रन्थरत्नमा वृहत् चर्चा गरिएको छ । चार खण्डमा विभाजित यस ग्रन्थरत्नमा वैदिक शास्त्र र मन्त्र साधना, परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज र मन्त्र साधना, श्री श्री महायोगी गुरु गोरखनाथ र मन्त्र साधना र सावर संरचना शक्ति केन्द्र र मन्त्र साधनाका बारेमा प्रसङ्ग कोट्याइएको छ ।

**सत्य नै सत्य**

योगीद्वय शिवशक्तिश्वरानन्द र अमृतानन्दद्वारा लिखित यो ग्रन्थरत्न श्री सावर संरचना शक्ति केन्द्रको चौथो ग्रन्थरत्न हो । वि. सं. २०६३ फागुन २८ गते सोमबार (अष्टमी) का दिन प्रकाशित यस ग्रन्थरत्नमा ज्योतिस्वरूप ॐकारको विषद् अन्वेषण गरिएको छ । पूर्णताको प्रतीक ॐकारको गूढ रहस्यलाई खोतल्दै शाश्वत् सत्य पस्कने चेष्टा भएको छ यस ग्रन्थरत्नमा । ॐकारको परिचय, त्रिदेवमा ॐकारको अस्तित्व, त्रिशक्तिमा ॐकारको अस्तित्व, त्रिगुणमा ॐकारको अस्तित्व, मानव देहमा ॐकारको अस्तित्व, जीव-जगत्मा ॐकारको अस्तित्वलगायतमा विषद् चर्चा समेटिएको यस ग्रन्थरत्नमा ॐकार साधना विधि, ॐकार ध्यान विधिलाई पनि समेटिएको छ ।

**गोरखभूमि परिचय**

श्री शिव गोरक्ष प्रथमपटक प्रकट हुनुभएको पवित्र दिव्यभूमि गोरखामा रहेका गोरखगुफा, विभिन्न पीठहरू र स्थानीय देवीदेवताहरूको बारेमा चर्चा गरिएको यो ग्रन्थरत्न वि.सं. २०६४ वैशाख १९ गते बुधबार चौथो रोट महोत्सवको पावन अवसरमा प्रकाशित भएको हो । योगीद्वय शिवशक्तिश्वरानन्द र कर्मवीरानन्दद्वारा रचित यस ग्रन्थरत्नमा गुरु गोरखनाथको ऐतिहासिक विवरण, गोरखा जिल्लाको परिचय, रोटलगायतका विषयमा जानकारी दिइएको छ ।

**ध्यानामृत**

वि.सं. २०६५ जेठ ७ गते मंगलबार श्री शिव गोरक्ष प्रकट दिवसको अवसरमा यस ग्रन्थरत्नको प्रकाशन भएको हो । योगीद्वय शिवशक्तिश्वरानन्द र कर्मवीरानन्दद्वारा रचित यस ग्रन्थरत्नमा ध्यानजस्तो दुर्लभ र उच्चकोटिको विषयमा खोज, अनुसन्धान भएको छ । समाजका मानिसहरूले ध्यानका प्रयोगात्मक पक्षहरूलाई अंगीकार गर्दै अगाडि बढ्न सकून् र ध्यानबाट प्राप्त ज्ञानबाट उच्चतातर्फ उन्मुख हुन सकून् भन्ने सदिच्छाले यस ग्रन्थको प्रकाशन भएको देखिन्छ । ग्रन्थरत्नमा ध्यानको परिचय, तात्पर्य, गर्ने तरीका र ध्यानलाई अपनाउँदा ख्याल राख्नु पर्ने आदि विषयमा चर्चा गरिएको छ । ग्रन्थरत्नमा पहिलो चरणको ध्यानका सातवटा विधिलाई पनि समावेश गरिएको छ ।

**मुद्रामृत ध्यान**

२०६६ सालको शिव गोरक्ष प्राकट्य दिवस (ज्येष्ठ ३ गते आइतबार) को पुनीत अवसरमा प्रकाशित यस ग्रन्थरत्नमा विभिन्न सातवटा मुद्रा ध्यान विधिहरूसहित गरिने ध्यानको सोपान पाइन्छ । योगीद्वय शिवशक्तिश्वरानन्द र कर्मवीरानन्दद्वारा लिखित यस ग्रन्थरत्नमा सातवटा मुद्रा ध्यानका विधिहरू समेटिएका छन् । ग्रन्थरत्नमा ध्यानसम्बन्धी विवेचना, मुद्रासम्बन्धी विवेचनालगायत ध्यानका लागि जान्नु पर्ने कुराहरूका सम्बन्धमा जानकारी दिइएको छ ।

**विभिन्न पुष्पहरु**

बालकदेखि वृद्धसम्म सबैले बुझ्ने गरी सरलतम भाषाशैलीमा अध्यात्मका विभिन्न पक्षहरू समेटिएका पुस्तकहरूको शृंखला पनि यस संरचनाबाट प्रकाशित छ जसमा हालसम्म निम्न आठवटा पुस्तकहरू प्रकाशित छन्– शारदा पुष्प, कल्याण पुष्प, मनष पुष्प, ज्ञान पुष्प, योग पुष्प, दैवी पुष्प, आत्म पुष्प र अमृत पुष्प । सिद्धाश्रम शक्ति केन्द्रको शैक्षिक मिसनअन्तर्गत खोलिएको गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा आध्यात्मिक शिक्षासम्बन्धी विषयमा पठन-पाठन गर्न पाठचपुस्तकको रूपमा यिनै पुस्तकहरूको अध्ययन अध्यापन भइरहेको छ ।

**महायोगीको परिचयको अंग्रेजी र रुसी भाषामा अनुवादित संस्करण**

श्री सावर संरचना शक्ति केन्द्रद्वारा प्रकाशित ' महायोगीहरूको परिचय' ग्रन्थरत्नलाई अंग्रेजी भाषामा अनुवाद गरी प्रकाशित गरिएको छ । श्री शिव गोरक्ष प्रकट दिवस-२०६६ को पावन अवसरमा अनुवाद गरी प्रकाशित गरिएको यस अंग्रेजी संस्करणलगत्तै यस ग्रन्थरत्नलाई रुसी भाषामा पनि अनुवाद गरी प्रकाशित गरिएको छ । यी दुवै अनुवादित संस्करणले महायोगीहरूको बारेमा जान्न चाहने विदेशी भाषीहरूलाई सहयोग गर्ने अपेक्षा राखिएको छ ।

आदरणीय पाठकहरूले पनि यसप्रकारका दिव्यतम ग्रन्थहरूको अध्ययन गरी मानव जीवनलाई धन्य बनाउनेतर्फ लम्कनुहुन हार्दिक अनुरोध छ ।

जय गुरुदेव ।

❑

# जागौँ नेपाली !

मानव विधाताको सर्वोत्कृष्ट सृष्टि हो त्यसैले मानव अध्यात्मिक जीव हो । अध्यात्मले सधैं नै प्रेम सिकाउँछ, कृतज्ञ बन्न सिकाउँछ र उत्रृण हुन सिकाउँछ । बाबुआमाले धेरै दुःख, कष्ट सहेर आफ्नो सन्ततिको लालनपालन गर्छन् र उसलाई एक सभ्य नागरिक बनाउँछन् । बाबुआमाले गर्ने यति धेरै उपकारको कारणले नै उहाँहरूलाई देवताको स्थान दिइन्छ, मातृदेव, पितृदेव भनिन्छ । बाबुआमाले सानो बच्चाप्रति गरेको दायित्व सन्ततिले फेरि ठूलो भएपछि फर्काउँछ, बाबुआमाको लालनपालन गरेर र यो नै कृतज्ञता व्यक्त गर्ने र ऋृणमुक्त हुने अर्थात् उत्रृण हुने प्रक्रिया हो । जुन सन्ततिले यसो गर्दैन, आफनो आमाबाबुप्रतिको आफ्नो दायित्व निभाउँदैन उसले जतिसुकै प्रगति गरे पनि एउटा सन्ततिको रूपमा ऊ कृतघ्न नै रहन्छ र आमाबाबुको ऋृणको भारी जन्म जन्मान्तरसम्म उसको काँधमा रहिरहन्छ ।

अध्यात्मले हामीलाई दिने शिक्षा उच्चकोटिको छ, वैज्ञानिक छ जसको अनुशरणद्वारा प्रत्येक मानवले आफ्नो जीवनलाई सुन्दर र शान्त बनाउन सक्दछ । बाबुआमाको मात्र होइन हामीलाई उपकार गर्ने प्रत्येकको सम्मान गर्न र प्रत्येकप्रति कृतज्ञ बन्ने शिक्षा अध्यात्मले सदा नै दिइरहेको छ । सूर्यले प्रकाश दिएर हामीलाई जीवन दिन्छन् । अरुको लागि सूर्य एक पिण्ड मात्र हुन सक्छन् तर हाम्रा लागि उनी सूर्यदेव हुन्, एक प्रत्यक्ष देव हुन् र यही रूपमा हामी उनको पूजा गर्दछौँ । त्यस्तै, जल हाम्रो लागि पानी मात्र नभएर जलदेवता हुन्, पवन हावा मात्र नभएर पवनदेव हुन्, आगो ताप मात्र नभएर हाम्रो लागि अग्निदेव हुन् ।

सम्मान र कृतज्ञताको यही क्रममा हामी धर्तीलाई 'धर्तीमाता' भन्दछौँ, उहाँको पूजा गर्दछौँ । यही प्रेम, सम्मान र ऋृणीभाव आफ्नो राष्ट्रप्रति पनि आवश्यक छ । त्यसैले त हामी नेपाललाई आफ्नो मातृभूमि भन्दछौँ, 'नेपाल आमा' मान्दछौँ । भौगोलिक दृष्टिकोणबाट नेपाल हिमाल, पहाड, तराईलाई समाविष्ट गरेको एउटा सानो भूभाग मात्र होला तर हाम्रो लागि उनी आमा हुन्, सुखदुःखको आभास गर्ने, हृदयमा ढुकढुकी भएकी जाग्रत आमा, अति नै ममतामयी र परमसुन्दरी आमा ।

यो सही हो कि सच्चा आध्यात्मिक व्यक्तिमा विराट भावको आवश्यकता हुन्छ । एउटा सच्चा आध्यात्मिक व्यक्तिले सम्पूर्ण विश्वलाई नै आफ्नो ठान्दछ र प्रत्येक मानवको कल्याण कामना गर्दछ । तर हरेक ठूलो कुराको शुरुआत त सानोबाट नै हुन्छ । जुन व्यक्तिले आफ्ना आमाबाबुप्रतिको कर्तव्य निभाउँदैन उसबाट समाजप्रतिको कर्तव्यको कम नै आशा गर्न सकिन्छ । त्यस्तै जसले आफ्नो घरको रक्षा गर्न सक्दैन उसबाट अरुहरूको रक्षाको आशा पनि कसरी गर्न सकिन्छ र !

अहिले समयको आवश्यकता छ आफ्नी आमाप्रतिको नेपाल आमाप्रतिको कर्तव्यको निर्वाह गर्ने । जुन सन्ततिमा आफ्नो आमाप्रतिको भाव छैन त्यो सन्तति जीवित भए पनि शव सरह मात्र नै हो । तसर्थ जुन मानिसमा राष्ट्रप्रेम छैन उसलाई मानिस नै पनि कसरी भन्ने ? नेपाल आमा आज जलिरहेकी छन्, रोइरहेकी छन्, चित्कार गरिरहेकी छन् । आमाको त्यो चित्कारको आवाज कतिपय सन्ततिहरूले सुनिरहेका छन्, कतिपयले सुनिरहेका छैनन् र कतिपयले सुनेर पनि स्वार्थवश नसुनेको जस्तो गरिरहेका छन् ।

अशान्ति, हत्या, हिँसाको अग्निमा त नेपालभूमि वर्षौंदेखि जलिरहेको थियो । अहिले फेरि विदेशी हस्तक्षेप, थिचोमिचो, सीमा अतिक्रमणको प्रताडना पनि यस भूमिले सहिरहेको छ । राष्ट्रियता नै आज संकटमा परेको छ । अहिले सबैभन्दा ठूलो कुरा नै राष्ट्रियताको रक्षा रहेको छ । राष्ट्र नै रहेन भने हाम्रो अस्तित्व कसरी रहला, राष्ट्र नै रहेन भने हाम्रो स्वाभिमान, हाम्रो गति, हाम्रो आध्यात्मिक

यात्रा कसरी अघि बढ्ला ?

प्रत्येक नेपाली नामगरिकको आजको प्रमुख दायित्व नै देशको रक्षा गर्नु हो । तर राष्ट्रको रक्षा गर्ने कसरी ? हामी सधैँ आफ्ना न्यूनताहरूलाई देख्दछौँ, हामी प्रायः नकारात्मक सोच्दछौँ । हाम्रो राष्ट्र सानो छ, हामी गरीब छौँ र हामी आत्मनिर्भर पनि छैनौँ । हामी सोच्दछौँ हामी कमजोर छौँ, हामी शक्तिहीन छौँ, त्यसैले हामी हरेक कुरामा सम्झौता गर्न तयार हुन्छौँ, हरेक अत्याचार चुपचाप सहन्छौँ ।

हामी आफूभित्रको शक्तिलाई, आफ्नो सबल पक्षलाई सधैँ नै बिर्सन्छौँ । हाम्रो नेपाल आध्यात्मिक भूमि हो, पुण्यभूमि हो जहाँका कण-कण चैतन्य छन्, दिव्य छन् । अनेकौँ देवीदेवताहरूको निवासस्थान रहेको, अनेकौँ ऋषिमुनिहरूको तपस्थली नेपाल भौतिकरूपमा गरिब होला तर आध्यात्मिकरूपमा धेरै धनी छ । यसभन्दा पनि माथि, धेरै-धेरै माथि नेपाल गोरक्ष भूमि हो । परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथद्वारा रक्षित यो भूमि न त कहिल्यै कमजोर थियो, न त अहिले नै छ । कमजोरी केवल हाम्रो मानसिकतामा छ ।

**विश्व मानचित्रमा नेपाल नै त्यो भूमि हो जसले गुरु गोरखनाथको पहिलो प्रकटस्थल हुनुको सौभाग्य पाएको छ । यहाँका उकाली ओराली, भञ्ज्याङ् चौतारी, समथर भूमिले उहाँको पावनतम चरणको स्पर्श पाएका छन्, यहाँको माटोका कण-कण उहाँको सामीप्यता पाएर धन्य-धन्य भएका छन् । तसर्थ यो भूमि सामान्य अवश्य नै छैन । सम्पूर्ण विश्व ब्रह्माण्डका रक्षक गुरु गोरक्षनाथद्वारा सृजित, रक्षित यो भूमि कमजोर कसरी हुन सक्छ ? यो भावना फगत् विश्वास होइन, इतिहास साक्षी छ जब-जब नेपाल भूमिको आकाशमा कालो बादल मडारिएको छ तब-तब गोरक्ष शक्तिको सक्रियताले नै कालो बादल हटेको छ र सर्वत्र उज्ज्वलता छाएको छ ।**

**गुरु गोरक्षको यही कृपा, अनुकम्पाले गर्दा नै नेपाल राष्ट्र अक्षुण्ण र स्वतन्त्र रहेको छ । हाम्रा शक्तिशाली छिमेकी राष्ट्रहरू पराधीन हुँदासमेत नेपाल सदा नै स्वाधीन रहेको छ । हाम्रा पूर्वजहरूले गुरु गोरखनाथ र माता गोरखकालीको पुकार गरेर मात्र ठूला-ठूला युद्ध जितेका र विश्वभरि नै वीर गोरखालीको नामले प्रशंसित भएका उदाहरणहरू पनि इतिहासका पानामा थुप्रै भेटिन्छन् ।**

नेपाल आमाको यो पवित्र र निष्कलंक छविलाई सदा नै यस्तै राखिराख्नु प्रत्येक नेपालीको परम कर्तव्य हो । यसको लागि हामीले गर्नसक्ने सबैभन्दा ठूलो कार्य नै गोरक्ष शक्तिलाई जगाउनु हो । गुरु गोरखनाथको सानोभन्दा सानो, अति सानो कृपादृष्टि नेपाल राष्ट्रको रक्षा गर्न यथेष्ट छ । यस अति सानो कृपादृष्टिका अगाडि संसारका ठूलाभन्दा ठूला कहलिएका शक्तिहरू व्यर्थ छन्, निरर्थक छन् । तसर्थ प्रत्येक नेपालीले गुरु गोरखनाथको भक्ति गर्नु आज अत्यावश्यक बनेको छ । सम्पूर्ण नेपालीहरूका रक्षक, राष्ट्रगुरु गोरखनाथलाई कुनै वंश, सम्प्रदायसँग मात्र जोड्नु अति नै संकीर्ण सोचाइको उपज मात्र हो ।

गुरु गोरखनाथ सम्पूर्ण योगीहरूमा महायोगी हुनुहुन्छ, सम्पूर्ण नाथहरूमा महानाथ हुनुहुन्छ । यो सृष्टिको शुभारम्भ नै उहाँको कृपाद्वारा भएको छ र उहाँको कृपादृष्टि पाएर नै सम्पूर्ण जीव, जगत् चलायमान छ । ब्रह्मा, विष्णु, महेशजस्ता देवताहरू पनि उहाँको अनुसार नै कार्यरत हुनुहुन्छ । गुरु गोरखनाथले विभिन्न कालखण्डमा विभिन्न रूपमा प्रकट भई सत्यको साथ दिनुभएको, मानवताको रक्षा गर्नुभएका धेरै गाथाहरू इतिहासमा पाइन्छन् । उहाँको उपस्थिति पाएर प्रत्येक युग धन्य भएका छन् ।

उहाँ यो शताब्दीमा यो ठाउँमा प्रकट हुनुभयो, उहाँले यस्तो कार्य गर्नुभयो भन्ने धेरै प्रसंगहरू हामी इतिहासमा भेटाउँछौँ । तर उहाँजस्तो दिव्यतम महायोगीलाई, अद्वितीय महागुरुलाई हामी इतिहासमा मात्र सीमित राख्न सक्तैनौँ किनकि वर्तमानमा पनि उहाँ त्यत्तिकै क्रियाशील हुनुहुन्छ । अहिले पनि आफ्नो भक्तको अन्तरहृदयको पुकारबाट विभिन्न ठाउँमा उहाँ प्रकट हुनुभएको धेरै घटना, परिघटनाका साक्षी पनि कतिपय भक्तहरू रहेका छन् ।

तसर्थ उहाँको अतुल कृपाप्रति, उहाँको अथाह शक्तिप्रति संशय गर्नु आवश्यक नै छैन । आवश्यक केवल एउटै कुरा छ– उहाँको भक्ति गर्नु, अन्तरहृदयबाट उहाँलाई पुकार्नु । आज प्रत्येक नेपालीले उहाँलाई पुकार्‍यौँ भने घर-घरमा उहाँको भक्ति गर्‍यौँ भने नेपालमा शान्ति छाउने, नेपाल राष्ट्रको रक्षा हुने मात्र होइन त्यसभन्दा पनि माथि नेपालले हाल दिशाहीन भइरहेको सम्पूर्ण विश्वलाई नै आध्यात्मिक नेतृत्व दिन सक्दछ, स्पष्ट दिशा निर्देश गर्न सक्दछ ।

यति ठूलो सामर्थ्य भएको देश भएर पनि, गुरु गोरखनाथको कृपा प्राप्त राष्ट्र भएर पनि हामी कति निरीह भएर बस्ने ? किन कमजोर भएर बस्ने ? तसर्थ उठौँ, जागौँ, सबै नेपालीहरूले आ-आफ्नो स्थानबाट गोरक्ष भक्ति गरौँ । बनाऔँ आफ्नी आमाको मुहारलाई शान्त र प्रफुल्ल अनि पारौँ उहाँको परमसौन्दर्य र उज्ज्वलताबाट विश्वलाई नै आलोकित । जय गुरुदेव ।

## सावर संरचनाबाट प्राप्त

# दिव्य साधनात्मक सूत्रहरू

*मन्त्र साधनाको क्षेत्रमा अघि बढेर उच्चता हासिल गर्न चाहने सम्पूर्णका लागि अत्यन्त महत्त्वपूर्ण सूत्रहरू जसको अक्षरश: पालना गर्नाले मात्र सफलता प्राप्त हुन्छ, यस्ता दिव्यतम सूत्रहरू श्री सावर संरचना शक्ति केन्द्रद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा रचित ग्रन्थ 'मन्त्र साधना–ऊर्ध्वसंगति'को खण्ड घ (सावर संरचनाबाट प्राप्त दिव्य साधनात्मक सूत्रहरू) पाठकवर्गको लाभार्थ क्रमश: प्रकाशित गर्दै आइरहेका छौँ । हामीलाई आशा एवं विश्वास छ, यी सूत्रहरूले यहाँहरूको साधनात्मक उच्चता प्राप्तिमा अवश्यमेव ठोस योगदान दिनेछन् । आगामी अंकदेखि अर्को दिव्य ग्रन्थबाट सामग्री प्रस्तुत गर्नेछौँ ।*

## उपासना, व्रत

साधनात्मकरूपमा अगाडि बढ्ने व्यक्तिहरूका लागि उपासना, व्रत पनि उति नै आवश्यक छ । हाम्रो धर्म-संस्कृतिमा पनि व्रतलाई ठूलो मान्यता दिइएको पाइन्छ । बुझेर, नबुझेर भए पनि हाम्रो समाजका अन्य व्यक्तिहरूले पनि उपासना, व्रत गर्ने गरेका छन् । विभिन्न तिथिमिति, चाडपर्वलाई आधार मानेर पनि व्रत बस्ने गरेको पाइन्छ । कसैले एकादशी त कसैले पूर्णिमा, कसैले सङ्क्रान्ति त कसैले प्रदोष, कसैले तीजको व्रत त कसैले पञ्चमीको, कसैले शिवरात्रिको त कसैले अष्टमीको, कसैले कुनै महिनामा त कसैले कुनै महिनामा, कसैले कुनै बारमा त कसैले कुनै बारमा । यसरी हेर्दा समाजका मानिसहरूले उपासना गर्नुपर्ने, व्रत बस्नुपर्ने सत्यतालाई बुझेको पाइन्छ र यसलाई जसरी-तसरी आफ्नो जीवनमा उतार्दै अगाडि बढेको पाइन्छ । व्रत बस्नुको कारण र यसको वास्तविक फाइदाको बारेमा, गूढ रहस्यको बारेमा बुझे पनि नबुझे पनि व्रत बस्ने परम्परालाई भने निरन्तरता दिएको पाइन्छ ।

मन्त्र साधनामा अगाडि बढ्ने प्रत्येक व्यक्तिले उपासना गर्नै पर्दछ । आवश्यकतानुसार व्रत पनि बस्नै पर्दछ । साधनामा अगाडि बढ्नेहरूका लागि व्रतले धेरै फाइदा दिएको हुन्छ । एक त व्रत बसेको दिनमा आफ्नो भावना पनि शुद्ध हुन्छ । तुलनात्मकरूपमा अन्य दिनमा भन्दा व्रत बसेको दिनमा साधनामा एकाग्र हुन पनि सजिलो हुन्छ । भगवान्को नाममा व्रत बसिसकेपछि दिनभरि नै चिन्तन, मनन पनि बढी हुन्छ, मानसिक मन्त्र स्मरण पनि भइरहेको हुन्छ । अर्कोतर्फ व्रत भनिसकेपछि त्यसदिनमा प्राय: भोकै बस्ने चलन छ । भोकै बस्दा स्वास्थ्यको हिसाबले पनि हामीभित्रका इन्जाइमहरूले पनि खाना पचाउने कार्यबाट विश्राम पाउँछन् र पाचन क्रियादेखि लिएर सम्पूर्ण शरीरमा राम्रो असर पर्दछ । यसरी हेर्दा स्वास्थ्य विज्ञानको दृष्टिकोणले व्रत बस्दा पनि राम्रो हुने मानिन्छ । शारीरिकरूपमा, भावनात्मकरूपमा व्रतले राम्रो प्रभाव गरेजस्तै आध्यात्मिक क्षेत्रमा पनि व्रतको आफ्नै विशेष महत्त्व रहेको पाइन्छ । आध्यात्मिकरूपमा व्रतलाई प्रायश्चित्तको रूपमा पनि लिने गरेको पाइन्छ । कुनै कार्य गर्दा हुने त्रुटि, कमी, कमजोरीलाई सच्याउनको लागि, क्षमा माग्नको लागि अर्थात् प्रायश्चित्त गरी यस्ता गल्ती, कमी, कमजोरीहरू भविष्यमा फेरि फेरि पनि नदोहोरिऊन् भन्नाका लागि भोकै बसी शरीरलाई कष्ट दिने गरिन्छ । यसरी शारीरिकरूपमा सजाय दिँदा हामीलाई पनि बारम्बार आफ्नो गल्तीको स्मरण भइरहन्छ र भविष्यमा यस्तो गल्ती गर्ने बेलामा पक्कै विचार गर्न थाल्दछौँ र गल्तीबाट जोगिन सक्छौँ । आध्यात्मिकरूपमा गल्तीको लागि प्रायश्चित्त गरी भोकै बस्ने चलनलाई धार्मिकरूपमा विभिन्न देवीदेवतालाई साक्षी राखी व्रत बस्ने चलन चलेको पाइन्छ । यसरी कसैले शिव भगवान्लाई बढी मानी उहाँलाई साक्षी राखी उहाँकै नाममा व्रत बस्छन् त कसैले गणेशलाई, कसैले सूर्य देवता, आदिलाई स्मरण गरी पनि व्रत बसिन्छ । त्यसैले मन्त्र साधनामा अगाडि बढ्ने व्यक्तिहरूले पनि आफ्नो गल्ती, कमी, कमजोरीहरूलाई घटाउँदै, आफूलाई सुधार्दै सपार्दै अगाडि बढ्नुपर्ने हुन्छ । व्यक्ति स्वयंले आफूलाई सुधार्नको लागि, आफ्नो गल्ती सच्याएर अगाडि बढ्नको लागि प्रायश्चित्त गर्ने माध्यम व्रतभन्दा अर्को केही छैन । त्यसैले साधनामा सफलता प्राप्त गरी आध्यात्मिक उच्चता हासिल गर्न हामीले आफूले आफैलाई सुधार्नको लागि पनि व्रत बस्ने गर्नुपर्दछ ।

व्रत उपासनाले व्यक्तिको भावनालाई परिस्कृत गरिदिन्छ र साधनाको सफलताको लागि मद्दत गरिदिन्छ । त्यसैले व्रतलाई आफ्नो जीवनमा अंगालौँ, मन्त्र साधनामा सफलता प्राप्त गरौँ ।

जय गुरुदेव ! समाप्त ।

# श्रावण महिनामा शिव आराधना

श्रावण महिना र देवाधिदेव महादेवको दर्शन, पूजन एवं रुद्राभिषेकको निकटतम सम्बन्ध छ, विशेष गरी श्रावणको सोमबारको दिनमा भगवान् शिवको पूजन । प्रश्न उठ्दछ कि शिव अर्चनाका लागि श्रावण महिना नै किन ? यसको उत्तरमा ऋग्वेद भन्दछ–

**संवत्सरंशशमानाब्रह्मणाव्रतचारिणः ।**
**वाचंपर्जन्यानिन्वितांप्रमण्डूकाअवादिषु ॥**

(सप्तम मंडल ७६३ को प्रथम श्लोक)

अर्थात् वृष्टिकालमा ब्राह्मणहरू वेदपाठ गर्दछन् र त्यसबेला प्रायः ती सूक्तहरू पढ्दछन् जुन तृप्तिदायक हुन्छन्। यसको यो अर्थ पनि हुन्छ कि वर्षा ऋतुलाई शृंगार प्रदान गर्ने जीवहरू यस ऋतुमा यसप्रकार ध्वनि उत्पन्न गर्दछन्, मानौं एक वर्षसम्म मौन व्रत धारण गरेर वर्षा ऋतुमा बोल्न शुरु गरेका हुन् । यस श्लोकमा परमात्माले यो उपदेश दिएका छन् कि जुन प्रकार क्षुद्र जन्तु पनि वर्षाकालमा आह्लादजनक ध्वनि उत्पन्न गर्दछन् अथवा परमात्माको यशोगान गर्दछन्, तिमी पनि यसै प्रकार परमात्माको यशोगान गर ।

**गोमायुरदादबमायुरदात्पृष्नरदाद्धरितोनो वसूनि ।**
**गवां मंडूकादक्षः शतानिसहस्रसावेप्रतिरंत आयुः ॥**

अर्थात् अनन्त प्रकारका औषधिहरू जसमा उत्पन्न हुन्छ, त्यस वर्षाकाल अथवा श्रावण मासलाई सहस्रसाप भनिन्छ । यसबेला परमात्माले हामीलाई अनन्त प्रकारका शिक्षा लाभ गराउनुहोस्, हाम्रो ऐश्वर्य र आयुलाई बढाउनुहोस् । शिव पूजनबाट सन्तान, धनधान्य, ज्ञान र दीर्घायुको प्राप्ति हुन्छ ।

शिवलाई जलधारा प्रिय छ । विशेष गरी सोमबारको दिनमा अन्जानमा नै गरिएको भए पनि शिवव्रत मोक्षप्रदाता हुन्छ । अन्जानमा शिवरात्रिको व्रत गर्दा पनि एउटा भिल्लमाथि भगवान् शंकरको कृपा यसप्रकार प्राप्त भयो– कुनै समयमा एकजना भिल्ललाई उसका मातापिता एवं पत्नीले भोकले पीडित भएर उसँग केही खानेकुराको याचना गरे। उनीहरूको याचना सुनेर त्यो भिल्ल मृगको शिकार गर्न वनतर्फ लाग्यो । ऊ सारा वनमा घुम्न थाल्यो । दैवसंयोगले त्यस दिन केही पनि पाइएन र सूर्यास्त भयो । उसले केही पनि नलिई घर जानु बेकार ठान्यो । भोक र प्यासले आक्रान्त भएर पनि ऊ शिकारको प्रतीक्षामा वनकै एउटा जलाशयको छेउमा बेलको रुखमा चढेर बस्यो । शिकारको प्रतीक्षमा बस्दा-बस्दा उसले त्यसै वृक्षका पातहरू चुड्दै खसाउँदै गरिरह्यो, यसरी नै रात्रिको प्रथम प्रहर बित्यो । संयोगवश त्यस वृक्षको तल शिवलिंग थियो र उसले झारेका बेल पत्रहरू शिवलिंगमाथि परिरहे । यसरी रात्रिको प्रथम प्रहरमा अन्जानमै भए पनि उसबाट भगवान् शिवको पूजन सम्पन्न भयो । त्यस पूजाको प्रभावले व्याधाका सम्पूर्ण पापहरू तत्काल नष्ट भए । अन्जान मै पूजन गर्दा त यस्तो भयो भने जब मानिसले पूरा चेतन अवस्थामा जानी बुझीकन, श्रद्धा भक्तिका साथ भगवान् शिवको पूजा जल, अक्षता, चन्दन, फूल, बेलपत्र आदिबाट गर्दछ भने उसमाथि भगवान् शिवको कृपा कसरी प्राप्त नहोला र ?

सोमबारको व्रतको दिनमा प्रातः कालमा नै स्नानादि गरेपश्चात् मन्दिर, देवालय वा घरमा नै श्रीगणेशको पूजाको साथमा शिवपार्वती तथा नन्दीको पूजा गरिन्छ । यस दिन प्रसादको रूपमा जल, दूध, दही, मह, घ्यू, चिनी, जनै, चन्दन, अबीर, बेलपत्र, भाङ, धतुरो, धूप, दीप, र दक्षिणाको साथै नन्दीको लागि पनि केही प्रसाद बनाएर भगवान् पशुपतिनाथको पूजन गरिन्छ । रात्रिकालमा घ्यू र कपूरसहित धूप, बत्ती, आरती गरी शिव महिमाको गुणगान गरिन्छ। लगभग श्रावण महिनाका सबै सोमबारहरूमा यही प्रक्रिया अपनाइन्छ । सर्वत्र पाप र कुसंस्कारको साम्राज्य रहेको हालको समयमा पनि यदि श्रावण सोमबारको व्रत बसेर भगवान् शिवसँग क्षमायाचना गरिन्छ भने भगवान् आशुतोषको औघडदानी कृपादृष्टिबाट पाप नष्ट हुन्छ ।

## बेलपत्र (बिल्वपत्र)

भगवान् शिवलाई बेलपत्र चढाउनाले लक्ष्मी प्राप्ति हुन्छ । बेलको रुखको पात नै वास्तवमा बेलपत्र हो जुन सामान्यतया तीनवटाको समूहमा पाइन्छ । केही पातहरू पाँचको समूहमा पनि हुन्छन् तर कमै मात्र । बेलको पात एउटा महत्त्वपूर्ण औषधि हो जसको औषधीय प्रयोगबाट हामीले कैयौं रोगबाट छुटकारा पाउन सक्छौं । बेलपत्रको मात्र नभई बेलको रुखको पनि विशिष्ट धार्मिक महत्त्व रहेको

छ। भनिन्छ बेलको रुखमा जल अर्पण गर्दा सबै तीर्थहरूको फल तथा शिवलोकको प्राप्ति हुन्छ।

**बिल्वपत्र टिप्ने मन्त्र**

**अमृतोद्भव श्रीवृक्ष महादेवप्रियः सदा। गृह्णामि तव पत्राणि शिवपूजार्थमादरात् ॥** (अर्थः अमृतबाट उत्पन्न सौन्दर्य र ऐश्वर्यपूर्ण वृक्ष महादेवलाई सदैव प्रिय छ। हे वृक्ष म तिम्रो पत्र भगवान् शिवको पूजाको लागि टिप्दछु।)

**बेलपत्र कहिले टिप्नु हुँदैन–**

**अमारिक्तासु संक्रान्त्यामष्टम्यामिन्दुवासरे। बिल्वपत्रं न च छिन्द्याच्छिन्द्याच्चेन्नरकं व्रजेत ॥** (लिंगपुराण)

(अर्थः औसी, संक्रान्तिको समयमा, चतुर्थी, अष्टमी, नवमी र चतुर्दशी तिथिहरूमा तथा सोमबारको दिन बेलपत्र टिप्न बर्जित छ।

**चढाइसकेको बेलपत्र पनि चढाउन सकिन्छ–**

**अर्पितान्यपि बिल्वानि प्रक्षल्यापि पुनः पुनः। शंकरायार्पणीयानि न नवानि यदि चित् ॥** (स्कन्दपुराण, आचारेन्दु)

अर्थात् यदि भगवान् शिवलाई अर्पण गर्नको लागि नयाँ ताजा बेलपत्र छैन भने यस्तो अवस्थामा चढाइसकेको बेलपत्रलाई धोएर फेरि चढाउन सकिन्छ।

**बेलपत्र चढाउने मंत्र**: भगवान् शिवको पूजामा यस मन्त्र पढेर बेलपत्र चढाइन्छ।

**त्रिदलं त्रिगुणाकारं त्रिनेत्रं च त्रिधायुतम्। त्रिजन्मपापसंहारं बिल्वपत्रं शिवार्पणम् ॥**

अर्थात् तीन गुण, तीन नेत्र, त्रिशूल धारण गर्ने तथा तीन जन्मको पापलाई संहार गर्ने हे भगवान् शिव म हजूरलाई त्रिदल बिल्वपत्र अर्पित गर्दछु।

# गुरु पूर्णिमा म

संसारमा सबैभन्दा श्रेष्ठ, सबैभन्दा महत्त्वपूर्ण, गरिमामय, महिमामय,
सम्मान दिने र उहाँको मार्गनिर्देशनलाई आत्मसात् गरी जीवनलाई रुपान्त
पर्व हो जुन पर्वमा शिष्यहरुले आफ्ना कमी कमजोरीहरुलाई तिलाञ्जली

गुरु पूर्णिमाको पावन अवसरमा सहभागी एकजना नयाँ सहभागीले अ
अवसरमा गुरु पूर्णिमा कार्यक्रममा उपस्थित हुन पाएकीले आफ्नो नयाँ ज

गत असार २३ गते काठमाडौँ सामाखुसीको ए. बी. पार्टी प्यालेसमा
पनि त्यतिबेला थुप्रै भेटिनुभएको थियो । कार्यक्रमको भव्यता र दिव्यताको

गुरु पूर्णिमा कार्यक्रममा गोरक्ष निखिल स्तवन, गुरु पूजन, विशेष मन
भएको थियो ।

दोस्रो चरणको कार्यक्रम गुरुसेवा दल नं ७ की सदस्य विनीता अर्या
उहाँले भन्नुभयो, गुरु पूर्णिमा शिष्य पूर्णिमा हो र यस पावन अवसरमा
निखिल ज्योति दिव्य विद्याश्रमलगायत सम्पर्क कार्यालय भक्तपुर र ललि
भएको थियो । भक्तपुर सम्पर्क कार्यालयको तान्त्रिक नृत्यमा आधारित आ
विशेष किसिमको थियो । कार्यक्रममा प्रस्तुत शरणमा छौँ हामी गुरु आन्तय
बेस्सरी नचाएको थियो भने प्रस्तुत अन्य भजनहरुमा पनि गोरक्ष निखिल
खुलेर नाच्नुभएको थियो । नाच्नेहरुको जोश, जाँगर, उत्साह र उमंग यस
नृत्यमा झुमिरहनुभएको थियो ।

कार्यक्रममा आफ्नो मन्तव्य व्यक्त गर्ने क्रममा सावर मातृकाज्यूले ध
उच्चतामा लैजाने भन्ने सोचाइ गुरुदेवले प्रत्येक पल लिनुहुन्छ । उहाँ हाम्र
जाहेर गर्ने पर्व नै गुरु पूर्णिमा हो ।

कार्यक्रममा सावरपन्थी सदस्यज्यू नं. १ र २ ले रुसबाट पठाउनुभएक
संस्थाको कार्यका लागि हालै सावर पन्थी सदस्य १ र २ ज्यूहरु रुसको
बारेमा पनि जानकारी गराइएको थियो । जय गुरुदेव ।

# …होत्सव २०६६

…ओजपूर्ण अद्वितीय कुनै तत्त्व छ भने त्यो गुरु तत्त्व हो र गुरुलाई श्रद्धा, …रण गर्ने पावन अवसर नै गुरु पूर्णिमा पर्व हो । गुरु पूर्णिमा पर्व नै त्यस्तो … दिएर नयाँ जीवनको गोरेटोमा हिँड्ने संकल्प गर्दछन् ।

…फ्नो धारणा व्यक्त गर्नुहुँदै माथिको अभिव्यक्ति दिनुभएको हा । उहाँले उक्त …जन्म भएको धारणा पनि व्यक्त गर्नुभएको थियो ।

… आयोजित गुरु पूर्णिमाको क्षणलाई विहंगम थियो भनेर विश्लेषण गर्नेहरु … आँकलन गरेर खुशी व्यक्त गर्नेहरु पनि बग्रेल्ती हुनुहुन्थ्यो ।

…त्रजप, हवन, लक्षदीप, आरतीको क्रमसँगै पहिलो चरणको कार्यक्रम समाप्त

…लको स्वागत मन्तव्यबाट शुरु भएको थियो । आफ्नो स्वागत मन्तव्यमा … शिष्यले गुरुबाट मनग्गे प्राप्ति गर्दछ । दोस्रो चरणको कार्यक्रममा गोरक्ष …तपुर, आरती संचालन केन्द्र बबरमहल र गोंगबुबाट भजन, नृत्य प्रस्तुत …र्यतारा नृत्य र ललितपुर सम्पर्क कार्यालयको देशभक्तिमा आधारित प्रस्तुति …र्यामी बोलको चुड्का भजनले सहभागी भक्तजन तथा साधक साधिकाहरुलाई … ज्योति दिव्य विद्याश्रमका विद्यार्थीहरुलगायत सहभागी तथा भक्तजन सबै नै …तो थियो कि कार्यक्रम औपचारिकरुपमा सकिएपछि पनि उहाँहरु अबेरसम्म

…भन्नुभयो, आफ्ना शिष्यहरुलाई दुःखमा कसरी जोगाउने, सुखमा कसरी …ा सुख, दुःखका साथी हुनुहुन्छ । उहाँले फेरि भन्नुभयो, गुरुप्रति कृतज्ञता

…को शुभकामना सन्देशलाई सावर मातृकाज्यूले पढेर सुनाउनुभएको थियो । … भ्रमणमा हुनुहुन्छ । कार्यक्रममा रुसमा सम्पन्न भएको गणेश साधनाको

श्रीकृष्ण जन्माष्टमीको पावन दिनमा भगवान् कृष्णको विशिष्ट पूजाको लागि आवश्यक सामग्री एकत्रित गरी सेतो वस्त्र बिछ्याई त्यसमा भगवान् कृष्णको प्राण-प्रतिष्ठित फोटो अथवा उहाँको प्रतिमा र श्रीकृष्ण यंत्र स्थापित गरौं। आफ्नो बायाँपट्टि धूपदीप बालौं। यसपछि हात जोडेर भगवान् गणपतिको स्मरण गरौं।

## प्रार्थना–

**सुमुखश्चैकदन्तश्च कपिलो गजकर्णकः।**
**लम्बोदरश्च विकटो विघ्ननाशो विनायकः॥**
**धूम्रकेतुर्गणाध्यक्षो भालचन्द्रो गजाननः।**
**द्वादशैतानि नामानि यः पठेच्छृणुयादपि॥**
**विद्यारम्भे विवाहे च प्रवेशे निर्गमे तथा।**
**संग्रामे संकटे चैव विघ्नस्तस्य न जायते॥**

## संकल्प–

दाहिने हातमा जल, अक्षता, पुष्प तथा कुंकुम लिऊँ–

**ॐ विष्णुर्विष्णुर्विष्णुः श्रीमद्भवतो महापुरुषस्य विष्णोराज्ञया प्रवर्तमानस्य अद्य श्री ब्रह्मणो द्वितीय परार्द्धे श्वेतवाराह कल्पे वैवस्वतमन्वन्तरे अष्टाविंशतितमे कलियुगे कलिप्रथमचरणे जम्बूद्वीपे भारतवर्षे अमुक मासे** (महिनाको नाम) **अमुक वासरे** (बारको नाम) **अमुक पुण्य तिथौ** (तिथिको नाम) **अमुक गोत्रीयः** (आफ्नो गोत्रको नाम) **अमुक शर्माऽहं** (आफ्नो नाम भनौं) **अद्य भगवतो कृष्णस्य प्रीत्यर्थं यथा मिलितोपचारैः पूजनं करिष्ये।**

जललाई जमीनमा छोडौं।

## कलश पूजन–

कलशमा जल भरेर आफ्नो दायाँतर्फ स्थापित गरौं र त्यसमा वरुण देवतालाई आह्वान गरौं–

**सर्वे समुद्राः सरितस्तीर्थानि जलदा नदाः।**
**आयान्तु देव पूजार्थ दुरितक्षयकारकाः।**

यसपछि '**वं वरुणाय नमः**' मंत्र उच्चारण गर्दै गन्ध, अक्षता र पुष्पलाई कलशमा राखेर तीर्थलाई आव्हान गरौं–

**गंगे च यमुने चैव गोदावरि सरस्वति।**

**नर्मदे सिन्धु कावेरि जलेऽस्मिन् सन्निधिं कुरु ॥**
**प्रसन्नो भव । वरदो भव । अनया पूजया वरुणाद्यावाहिता देवता प्रीयन्तां न ममः ॥**

## पवित्रीकरण–

**ॐ अवपवित्रः पवित्रो वा सर्वास्थां गतोऽपि वा ।**
**यः स्मरेत् पुण्डरीकाक्षं सः बाह्याभ्यन्तरः शुचिः ॥**

## गुरु पूजन

दुवै हात जोडेर गुरुदेवको ध्यान गरौँ–

**गुरुर्ब्रह्मा गुरुर्विष्णुः गुरुर्देवो महेश्वरः ।**
**गुरुः साक्षात् पर ब्रह्म तस्मै श्री गुरवे नमः ॥**

यसपश्चात् गन्ध, अक्षता, पुष्प र धूप-दीपबाट पञ्चोपचार पूजन गरौँ । फेरि नजिकै रहेको भगवान् कृष्णको सुन्दर फोटो अथवा चित्र (प्रतिमा विग्रह) मा षोड्शोपचार पूजन गरौँ –

## ध्यान

**वंशी विभूषित करान्नव नील दाभात्,**
**पीताम्बरादरुण बिम्ब फलाधरोष्ठात् ।**
**पूर्णेन्दु सुन्दर मुखादर बिम्ब नेत्रात्,**
**कृष्णात् परं किमपि तत्त्वमहं न जाने ॥**
**श्रीकृष्णाय नमः ध्यानं समर्पयामि ।**

## आसन

पुष्प लिएर कुनै थालीमा आसनको रूपमा स्थापित गरौँ र त्यसमा श्रीकृष्ण विग्रह स्थापित गरेर निम्न मंत्रको उच्चारण गरौँ–

**रम्यं सुशोभनं दिव्यं सर्व समन्वितं,**
**आसनं च मया दत्तं गृहाण परमेश्वर ।**
**श्रीकृष्णाय नमः आसनं समर्पयामि ।**

## पाद्य

श्रीकृष्ण विग्रहमा जल चढाऔँ–

**गंगोदकं निर्मलं च सर्व सौगन्ध्य संयुतम्,**
**पाद प्रक्षालनार्थाय दत्तं ते प्रतिगृह्यताम् ।**
**श्रीकृष्णाय नमः पाद्यं समर्पयामि ।**

## अर्घ्य

अर्घ्यको जल आचमनीले श्री कृष्ण विग्रहमा चढाऔँ–

**अर्घ्य गृहाण देवेश गन्ध पुष्पाक्षतैः सह,**
**करुणाकर मे देव गृहाणाऽर्घ्य नमोऽस्तुते ।**
**श्रीकृष्णाय नमः अर्घ्यं समर्पयामि ।**

## आचमनीयम्

आचमनीबाट तीनपटक जल विग्रहमा चढाउँदै निम्न मंत्रको उच्चारण गरौँ–

**सर्व तीर्थ समानीतं सुगन्धिं निर्मलं जलं,**
**आचम्यता मया दत्तं गृहीत्वा परमेश्वरं ।**
**श्रीकृष्णाय नमः आचमनीयं समर्पयामि ।**

## मधुपर्क

काँश, चाँदी अथवा तामाको पात्रमा मह, घ्यू, दही मिलाएर विग्रहमा चढाऔँ–

**इदं मधुपर्क श्रीकृष्णाय निवेदयामि नमः ।**

## स्नान

आचमनीबाट जल चढाउँदै निम्न मंत्रको उच्चारण गरौँ–

**वृन्दावन विहारेण श्रान्ते विश्रान्ति कारकं ।**
**चन्द्रपुष्कर पानीयं गृहाण पुरुषोत्तम ॥**
**श्रीकृष्णाय नमः स्नानं समर्पयामि ।**

## दुग्धस्नान

**ॐ पयः पृथिव्यम्पयोऽषधीषु पयोदिव्यन्तरिक्षे**
**पयोधाः पयस्वतीः प्रदिश सन्तुमह्यम् ।**
**श्रीकृष्णाय नमः दुग्ध स्नानं समर्पयामि ।**

## दधिस्नान

**ॐ दधिक्राव्णो अकारिषं जिष्णोरश्वस्य वाजिनः ।**
**सुरभि नो मुखाकरत् प्रण आयू (गूं) षितारिषत्**
**श्रीकृष्णाय नमः दधि स्नानं समर्पयामि ।**

## घृत स्नान

**ॐ घृतं मिमिक्षे घृतमस्य योनिर्घृते श्रितो घृतमस्य धाम ।**
**अनुष्यधमावह मादयस्व स्वाहा कृतं वृषभवक्षि हव्यम् ॥**
**श्रीकृष्णाय नमः घृतं स्नानं समर्पयामि ।**

## मधुस्नान

मह चढाउने–

**ॐ मधुव्वाता ऋतायते मधुक्षरन्ति सिन्धवः माध्वीर्नः सन्त्वोषधीः । मधुनक्तमुतोष सो मधुमत्पार्थिव (गूं) रजः । मधु–द्योरस्तुनः पिता मधुमान्नो वनस्पतिः मधुमानस्तु सूर्यः माध्वी र्गावो भवन्तु नः ।**
**श्रीकृष्णाय नमः मधु स्नानं समर्पयामि ।**

## शर्करा स्नान

**ॐ अपा (गूं) रसमुद्वयस् (गूं) सूर्यसन्त (गूं) समाहितम् । अपा (गूं) रसस्य यो रसस्तं वो गृह्वाम्युत्तममुपयामगृहीतोसीन्द्राय त्वा जुष्टं गृह्वाम्येषते योनिरिन्द्राय त्वा जुष्टतमम् ।**

**श्रीकृष्णाय नमः शर्करा स्नानं समयर्पयामि ।**

## पंचामृत स्नान

**ॐ पंच नधः सरस्वतीमपियन्ति सस्त्रोतसः ।**
**सरस्वती तु पंचधा सो देशेऽभवत्सरित् ।**
**श्रीकृष्णाय नमः पंचामृत स्नानं समर्पयामि ।**

यसपश्चात् भगवान् कृष्णको विग्रह तस्वीर वा यंत्रलाई शुद्ध जलबाट स्नान गराएर पुछौं ।

## वस्त्र

निम्न मंत्रको उच्चारण गर्दै उत्तम स्तरको पहेंलो वस्त्र भगवान्लाई पहिऱ्याऔं–

**इदं परिधेय वस्त्रं उत्तरीयं वस्त्रं च श्रीकृष्णाय**
**निवेदयामि नमः**

## आभूषण

हार, मुकुट-मणि आदि गहना भगवान्लाई पहिऱ्याउँदै यस मंत्रलाई उच्चारण गरौं–

**इमानि भूषणानि श्रीकृष्णाय निवेदयामि नमः ।**

## गन्ध

केशर, कपूरमिश्रित चन्दन लिएर भगवान् कृष्णको निधारमा लगाऔं–

**इमं गन्धं श्रीकृष्णाय निवेदयामि नमः ।**

## अक्षता

**अक्षताश्च सुरश्रेष्ठ कुंकुमाक्तः सुशोभिताः**
**मया निवेदिता भक्तत्या गृहाण परमेश्वर ।**
**श्रीकृष्णाय नमः अक्षतान् समर्पयामि ।**

## पुष्पहार

नाना प्रकारका सुगन्धित पुष्प तथा पुष्प माला विग्रहमा चढाऔं र निम्न मंत्रको उच्चारण गरौं–

**इमानि पुष्पाति श्रीकृष्णाय निवेदयामि नमः ।**

## तुलसी दल

तुलसी दलमा चन्दन लगाएर निम्न मंत्रको उच्चारण गर्दै चढाऔं–

**इदं सचन्दनं तुलसीदलं श्रीकृष्णाय निवेदयामि नमः ।**

## धूप

निम्न मंत्र पढ्दै धूप अर्पण गरौं–

**इमं धूपं श्रीकृष्णाय निवेदयामि नमः ।**

## दीप

श्रीकृष्णलाई दीप देखाऔं–

**इमं दीपं श्रीकृष्णाय निवेदयामि नमः ।**

## नैवेद्य

स्वच्छ थालीमा भोज्य पदार्थ सजाएर भगवान्को सामु राखौं, साथमा पानी पनि राखौं र निम्न मंत्र उच्चारण गरौं–

**ॐ क्लीं कृष्णाय गोविन्दाय गोपीजना वल्लभाय स्वाहा ।**

यसपश्चात् निम्न मंत्रको उच्चारण गरौं–

**इदं नैवेद्यं श्रीकृष्णाय निवेदयामि नमः ।**

यसपश्चात् यस मंत्रबाट पाँचपटक आचमन गरौं–

**ॐ प्राणाय स्वाहा । ॐ अपानाय स्वाहा ।**
**ॐ व्यानाय स्वाहा । ॐ उदानाय स्वाहा ।**
**ॐ समानाय स्वाहा ।**

## फल

अनेक प्रकारका ताजा फल थालमा सजाएर भगवानलाई अर्पित गरौं–

**इदं फलं मया देव स्थापितं पुरतस्तव,**
**तेन मे सफला वाप्तिः भवज्जन्मनि जन्मनि ।**

## ताम्बूल

भगवान्लाई पान, सुपारी आदि अर्पित गरौं–

**एतत् ताम्बूलं श्रीकृष्णाय निवेदयामि नमः ।**

## पुष्पांजलि

दुवै हातमा पुष्प लिएर भगवान् कृष्णलाई अर्पित गरौं–

**नाना सुगन्ध पुष्पाणि यथा कालोद्भवानि च,**
**पुष्पांजलि मया दत्ता गृहाण परमेश्वर ।**
**श्रीकृष्णाय पुष्पांजलि समर्पयामि नमः ।**

## नमस्कार

दुवै हात जोडौं–

**कृष्णाय वासुदेवाय हरये परमात्मने ।**
**प्रणतक्लेशनाशाय गोविन्दाय नमो नमः ।**
**श्रीकृष्णाय नमः नमस्कारोमि ।**

यसपश्चात् निम्न मंत्रको तीन माला कुनै पनि मालाबाट मंत्रजप गरौं–

**॥ ॐ नमो भगवते वासुदेवाय ॥**

## विशेषार्घ्य

निम्न मंत्रका साथ अर्घ्य दिने–

**अनया पूजया श्रीकृष्णः परमात्माप्रीयन्ताम् ।**
**ॐ तत्सद् ब्रह्माणर्पणमस्तु ।**

यसपछि आरती सम्पन्न गरौं ।

# आरती कुञ्ज बिहारी की

आरती कुञ्ज बिहारी की, श्री गिरिधर कृष्ण मुरारी की
गले में वैजयंतीमाला, बजावें मुरली मधुर बाला
श्रवण मे कुंडल झलकाला, नन्द के नन्द
मोहन बृज चंद, हरी सुख कंद
राधिका रमण बिहारी की, श्री गिरीधर कृष्ण मुरारी की
आरती कुञ्ज बिहारी की, श्री गिरिधर कृष्ण मुरारी की

गगन सम अंग कांति काली, श्री राधा चमक रही आली
लतन में ठाडे बनमाली, भ्रमर सी अलक,
कस्तुरी तिलक, चन्द्र सी झलक
ललित छवि श्यामा प्यारी की, श्री गिरिधर कृष्ण मुरारी की
आरती कुञ्ज बिहारी की, श्री गिरिधर कृष्ण मुरारी की

कनकमय मोर मुकुट विलसें, देवता दर्शन को तरसें
गगन सों सुमन बहुत बरसें, बजत मुरचंद
मधुर मृदंग, ग्वालिनी संग
लाज रख गोप कुमारी की, श्री गिरिधर कृष्ण मुरारी की
आरती कुञ्ज बिहारी की, श्री गिरिधर कृष्ण मुरारी की

जहाँ ते प्रकट भई गंगा, कालुष कलि हारिणी श्री गंगा
स्वर्ण ते होत मोह भंगा, बसी शिव शीश
जटा के बीच, हरे अघ कीच
चरण छवि श्री बनवारी की, श्री गिरिधर कृष्ण मुरारी की
आरती कुञ्ज बिहारी की, श्री गिरिधर कृष्ण मुरारी की

चमकती उज्वल तट रेणू, बाज रही बृन्दावन वेणू
चहुं दिश गोपी ग्वाल धेनु, हसंत मृदु मंद
चांदनी चंद, कटत भव फंद
टेर सुन दीन भिखारी की, श्री गिरिधर कृष्ण मुरारी की
आरती कुञ्ज बिहारी की, श्री गिरिधर कृष्ण मुरारी की

आरती कुञ्ज बिहारी की, श्री गिरिधर कृष्ण मुरारी की





# शक्ति रुपान्तरणको रहस्य गुरु परीक्षा

गुरुसत्ता त्यो सर्वोच्च शक्तिपुञ्ज हो जसले जीवनको वास्तविक स्वरूपलाई चिनाउँदै परब्रह्मसँग साक्षात्कार गराउँदछ । एउटा अमृतको थोपा जसको रसास्वादनको मादकतामा उन्मत्त हुँदै त्यसैमा विसर्जित हुने प्रक्रिया, पूर्णरूपमा डुबुल्की लगाउँदै एकाकार हुने ब्रह्मानन्द स्वरूपको नाम नै गुरु हो । जहाँ गुरुत्व हुन्छ त्यहाँ शिष्यत्व, गुरुकार्य र गुरु परीक्षाको प्रारम्भ हुन्छ । गुरु-शिष्यको परम्परा, गुरु महिमा र आध्यात्मिक पुनर्संरचनाको शंखघोष गरी गुरु परीक्षाका चरण र चुनौति पार गर्दै र गराउँदै शक्ति रूपान्तरणको चरणमा अगाडि बढिरहेको गुरुधाम सिद्धाश्रम शक्ति केन्द्र भौतिक स्वरूप मात्र नभई आफैमा दिव्य महामन्त्र हो, आध्यात्मिक रहस्य र शक्तिपुञ्जको भण्डार हो जहाँ उनै ब्रह्माण्डनायक सद्गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा, अनुकम्पा तथा आशीर्वाद बर्सिरहेको छ ।

परम कृपालु सद्गुरुदेवहरूको अपार कृपा तथा आशीर्वादस्वरूप आ-आफ्नै आध्यात्मिक स्तर, संस्कार, दक्षता र क्षमताअनुरूप विभिन्न स्वरूपका गुरुकार्य प्राप्त गर्नु हामी कार्यकर्ताहरूको लागि अद्भुत सौभाग्य हो । जब गुरुभावमा एकचित्त रही गुरुकार्यको प्रारम्भ हुन्छ तब गुरु परीक्षाका चुनौति र प्रहारहरू हाम्रो सामु आईपर्दछन् । गुरु परीक्षा त्यो कडी हो जहाँ शिष्यहरूका कमी-कमजोरी र आन्तरिक अशुद्धतालाई माझ्ने काम गरिन्छ । शिष्य गुरुशक्तिसँग खिचिँदै जाँदा गुरुशक्ति बोक्न सक्ने क्षमता सृजना गर्न तथा शिष्यत्व जाँचको लागि गरिने गुरु प्रहार नै गुरु परीक्षा हो ।

काम, क्रोध, लोभ, अहंकार, भौतिक उतारचढाव, मान-सम्मान, इज्जत, बदनामी आदि मात्र नभई गुरुकार्यको स्वरूप, चुनौति र स्वयंमा आएका मानसिक परिवर्तनलाई लिएर गुरु परीक्षा हुने गर्दछ । गुरु परीक्षा कति बेला, कुन अवस्थामा हुन्छ भन्ने कुरा र यसको रूप, रंगलाई हामी पूर्वानुमान गर्न सकिरहेका हुँदैनौं । जब हामी पूर्ण भावमा रही गुरु कार्यका चरणहरू पार गर्दै जान्छौं तब जन्म-जन्मदेखि रहीआएका कर्मदोष, भोग्नुपर्ने भागभोग र पूर्वसंस्कारहरूमा निहित बाह्य र आन्तरिक दोष मेटिँदै गएर हामीमा शुद्धताको ढोका खुल्दछ । शिष्यलाई जीवनको लक्ष्य चिनाउँदै त्यस

विराट् सत्तासँग मिलन गराउन खनिएको गुरुरूपी बाटोमा जतिसुकै काँढा बिझे पनि, हुरी बतास अनि आँधीसँग टक्कर लिँदै गुरु परीक्षारूपी चुनौतिलाई हामीले पार गर्नु नै पर्दछ। गुरु परीक्षाले ल्याएको सन्देशलाई बुझ्नुपर्दछ, सुन्नुपर्दछ। गुरु परीक्षामा पर्दा आएका क्षणिक दु:ख, कष्टबाट भाग्नु हुँदैन । गुरुमार्गको अनुशरण गर्दा पनि प्रगति भएन भन्ने मानसिकता र गुरुकार्यको अहंतालाई हावी बनाउँदै गुरु परीक्षामा अवाञ्छित र नकारात्मक सोच मात्र ल्यायौं भने हामी परिवर्तित भई गुरु मार्गमा अगाडि बढ्न सक्दैनौं। फलस्वरूप गुरु परीक्षामा अनुत्तीर्ण भई हामीमा भएको शक्ति र क्षमता रूपान्तरण हुँदै तल्लो स्तर र अवस्थामा पुग्न पनि सक्दछ।

गुरु परीक्षा गुरुहरूको त्यस्तो रहस्यमय योजना हो जसबाट हामीभित्र रहेका शत्रुहरूलाई नाश गर्दै गुरुहरूको शक्ति प्राप्त गर्ने प्रक्रियाको छनौटमा हामी पर्दछौं। जब हामी गुरु परीक्षामा उत्तीर्ण हुँदै जान्छौं तब गुरुहरूले हामीलाई अझ नयाँ दायित्व थपिदिनुहुन्छ। त्यो नेतृत्व सम्हाल्न उहाँले पूर्वावस्थाको क्षमता र शक्तिबाट रूपान्तरण गरी हामीमा थप शक्तिको रूपान्तरणबाट अझ शक्तिवान् र क्षमतावान् बनाउनुहुन्छ। गुरु परीक्षा भइरहेको बेला नकारात्मकताबाट जोगिन हामीले आफूलाई इच्छाशक्ति र आत्म सुझावद्वारा बलियो बनाउनुपर्दछ। नकारात्मक कुरा, दु:ख, पीडालाई पनि आदर र सम्मान गरी हरेक परीक्षालाई स्वागत गर्नुपर्दछ जसको सदुपयोगले स्वयंको आन्तरिक अशुद्धता र जन्म-जन्मका कुसंस्कारहरूलाई मेटाउँदै हामी गुरु शरणमा लीन हुन सक्दछौं, गुरुहरूको महान् योजनानुरूप हिँड्न सक्षम हुन्छौं।

वैज्ञानिक थोमस एडिसन जसले बिजुलीको आविष्कार गरे र विश्वभरि प्रख्यात् भए, उनले अरबौं पैसा कमाए र यही पैसा उनले आफ्नो वैज्ञानिक प्रयोगशालामा लगानी गरे। केही वर्षपश्चात् उनको प्रयोगशाला आगलागी भई करोडौंको सम्पत्ति नष्ट भयो। यसै क्रममा पत्रकारहरूले उनलाई प्रश्न गरे, 'तपाईंलाई यत्रो सम्पत्ति नष्ट हुँदा दु:ख लागेन ?' एडिसनले भने, 'मलाई यो गुरु परीक्षामा पारिदिने मेरो परमेश्वरलाई म कृतज्ञता र धन्यवाद दिन्छु किनभने मेरो प्रयोगशालामा थुप्रै त्रुटी र कमी-कमजोरीहरू थिए। अब ममा झन् नयाँ जोश र चुनौति थपिएको छ। मैले अब नयाँ प्रविधिसहितको त्रुटीरहित प्रयोगशालाको निर्माण गरी नयाँ आविष्कार गर्नुछ।' हामी पनि एडिसनजस्तै कत्ति पनि विचलित नभई सकारात्मक हुनुपर्दछ। मनस्थितिलाई बलियो बनाउँदै हरेक गुरु परीक्षालाई शक्तिको रूपले र नयाँ अवसरको आँखाले हेर्नुपर्दछ।

**कविता**

# श्री गोरक्ष वन्दना

महायोगी ठूला अजररुपका नाथ सबमा ।<br>
बसे गोर्खा रोजी झलमल गरी गोरख जहाँ ।।<br>
भलो राम्रो ठानी जनमन विभूत् भाव ममता ।<br>
तिमी नै हौ भोला सकलरुपका त्रास हरता ।।१।।

जगत् भर्ता कर्ता प्रकट बनि यो जन्म रुपमा ।<br>
सबैका छौ साथी क्षणक्षण तिमी दु:ख सुखमा ।।<br>
जगै हाम्रो गोर्खा प्रभु बनिदियौ मार्ग सुरुको ।<br>
सदा भुल्ने छैनौं समय गतिमा पाद गुरुको ।।२।।

तिमी स्वामी हाम्रा शरण लिनु है मूर्ख जनको ।<br>
हटून् हाम्रा सारा तमहरुसितै पाप मनको ।।<br>
तिनै लोक्का स्वामी झलल बलने दीप सरि औ ।<br>
उनै देवी काली शरण लिनु है मूर्ख सरि छौं ।।३।।

सबै साधक् हामी सरलमनले आश गरि लौ ।<br>
लहै इच्छा हाम्रो क्रमिकरुपले पूर्ण गरिद्यौ ।।<br>
भयौं अन्धाजस्तै गुरु र महिमा ज्ञान हिनको ।<br>
तिमी ऐना जस्तै समरस भयौ भक्तजनको ।।४।।<br>
जय गुरुदेव

—यदुनाथ भट्ट<br>
तान्द्राङ्ग ७, गोरखा

अत: गोरक्ष निखिल युग निर्माण गर्न डटिरहेका हामी गो.नि. सिपाहीहरू बिल्कुल विचलित नभई आइपर्ने जस्तोसुकै समस्या र चुनौतिको सामना गर्दै नयाँ जोश र जाँगरका साथ सारा संसारलाई गो.नि. शक्ति र गुरुसत्ताको छाता ओढाउनुछ। गुरु परीक्षाहरू पार गर्दै अहंतालाई नाश गरी जप, तप र साधनाको बलबाट शक्ति प्राप्त गर्नुछ। जीवनको आनन्द, गुरु प्रेम र सर्वोच्च सत्ता गुरुसत्ताको मादक तरंगमा पूर्णरूपमा सिंचित भएर विराटताको दर्शन गर्नुछ। अनि मात्र हामी गुरुरूपी अमृत प्यालाको रसपान गरी धन्य-धन्य हुनेछौं र सारा जगत्मा गोरक्ष निखिल सन्देश छर्न सक्नेछौं। जय गुरुदेव !

*यस स्तम्भअन्तर्गत परमपूज्य सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूले आफ्नो अवतरणकालमा विभिन्न समयमा विभिन्न विषयमा दिनुभएको प्रवचनलाई धारावाहिकरूपमा प्रस्तुत गर्ने क्रममा 'अकथ कहानी प्रित की' विषयको प्रवचनलाई अनुवाद गरी प्रकाशन गरिएको छ ।*

# विरहभित्रको प्रेम

**ये दो नयन कह्यो नहीं माने, नदियां बहे जैसे सावन की ।**

आफ्नो शरीरलाई त म सम्झाउँला तर मेरा आँखाहरूले यी कुरालाई मान्दैनन्, बुझाउँदा पनि यिनीहरूले बुझ्दैनन् । यी आँखाहरूबाट त साउनको उर्लंदो भेल बग्न लाग्दछ । यी आँखाहरूलाई सम्झाउनु अब मेरो वशमा छैन । त्यसैले तिमी नै आएर यी आँखाहरूलाई सम्झाऊ ।

**का करूँ कछु बस नहीं मेरो, पांख नहीं उड़ जावन की,**
**मीरा कहे प्रभु कब रे मिलोगे, चेरी भई तेरे दामन की ।**

म त केवल तिम्री दासी हुँ । मैले त केवल तिम्रो प्रतीक्षामा नै आफ्नो जीवनलाई समेटिरहेकी छु । मेरो जीवनको कुनै अरू उद्देश्य छँदैछैन । मेरो जीवनको एउटै उद्देश्य भनेको त तिमीलाई पाउने हो र तिमीलाई मैले पाएरै छोड्छु । तिमीलाई पाएर सबैलाई महसुस गराउँछु कि मैले जीवनमा बनाएको लक्ष्य पूरा गरेकी छु ।

मेरो जीवन यस्तै नै हो भने, यदि तिमीले मलाई विरह नै दिन चाहन्छौ भने म त्यो विरहलाई पनि लिन चाहन्छु, म यसैमा आफ्नो जीवन बिताउन तयार छु ।

**सूनी सेज व्यथा कहूं कासूं, अबला धरे न धीर,**
**दादुर मोर पपीहा बोले, ज्यों लागत तन तीर ।**

कोइली (पपीहा) बोल्दा यस्तो लाग्दछ कि ऊ बोलिरहेको छैन, उसले त मेरो कलेजो भालाले छेडिरहेको छ । मेरो सारा तनमा भाला रोपिएको छ किनकि त्यो पिव-पिव भनेर कराउँछ । पिव शब्द नै त मेरो जीवनमा जंजाल बन्न पुगेको छ...। तड्पिएर उसले भन्छे–

**पपीहा चांच कटाय दूं, ऊपर डालूं नोन**
**पिव मेरा मैं पिव की तू पिव कहे सो कौन ।**

प्रिय मेरो हो, म प्रियकी हुँ... तर तिमी बीचमा पिव-पिव भन्ने को हौ ? फेरि पनि यस्तो बोलेमा अवश्यै म तिम्रो चुच्चो काट्न लगाउँछु ।

त्यस पंछीप्रति पनि उसको हृदयमा कति एकान्तता छ, कति व्याकुलता छ ! ऊ कोइलीसित समेत कराइरहेकी छे– प्रिय उसको हो, संसारमा उसको प्रिय अरु कसैको पनि होइन, कसैको केही पनि अधिकार छैन र कसैले उसलाई प्रिय शब्दबाट बोलाउनै सक्तैन । उसको प्रिय कसैको भएको खण्डमा त उसको लागि सबैथोक बेकार हुन्छ ।

**सकल शृंगार भार ज्यों लागे, मन भावे कछु नाहि,**
**कासूं बात करूँ किन खातिर जिदयो नाहि माहि ।**

यो सारा स्वरूप, यो सारा सुन्दरता, यो सारा शृंगार भारस्वरूप लाग्न लागेको छ । अब म कोसित बोलूँ, कसले मलाई सम्झाउला ? यो कुरा त मैले भित्रभित्रै दबाएकी छु, कसैलाई पनि

भन्न सक्तिन किनकि जिब्रोमा आउनासाथ त्यो प्रेमको अन्त्य हुन जान्छ । प्रेम त आफैमा समेटिएको जीवनको एउटा ढुकढुकी हो, एउटा चेतना हो । तिमी मभित्र बसेका छौ, त्यसैले घण्टौं तिम्रो चित्रसँग म कुरा गरिरहन्छु– यस्तो लाग्दछ तिमी मभित्र बसिरहेका छौ... म तिम्रो लागि ओछ्यान लगाउँछु... शृंगार गर्छु... र बिलकुलै कोमल बुहारी झारजस्ती भएर प्रतीक्षा गर्दछु... अब तिमी आउनेछौ... कहिले त तिम्रो पदचाप सुनिन्छ पनि... तर तुरुन्तै सबैथोक बेकार हुन जान्छन् किनकि यो विरहले मलाई साँपले डसेजस्तै मलाई डस्न लाग्दछ ।

**कनक आभास वात सब फीके बिन पिय के परसंग,**
**महा विपत बिहार लाड बिनु लाडली विरह भुजंग ।**

म त केवल तिमीलाई पाउन व्यग्र छु, र, यो बाटो अत्यन्तै कठिन भए पनि मैले तिमीलाई पाउँछु नै । तर पनि प्रेमकथा त अकथ हो । यस कथालाई म भन्न पनि त सक्दिन, कतिसम्म भनूँ ?

–अकथ कहानी प्रीतको
–जसलाई बताउनै सकिन्न
–जसको बयानै गर्न सकिन्न
–जसलाई जति भने पनि कम नै हुन्छ

–यही नै त्यो कुरा हो जुन संसारभर फैलिन्छ । तर यो कुरा निश्चित हो कि फैलिन्छ भने फैलियोस्, म त तिमीलाई पाएरै छोड्छु ।

**गरेवां चाक भी होगा फुंगा तक बात आ पहुंची,**
**वहां तक जा ही पहुंचेगी जो यहाँ तक बात आ पहुंची ।**
**मिटा कर अपनी हस्ती तुझको आखिर पा ही लूंगा मैं,**
**जलेंगे बातों पर भी आशियां तक बात आ पहुंची ।**
**बनाया था आखिर जलाने को आशियां अपना,**
**चमन ने शुक्र है बक्रेतपां तक बात आ पहुंची ।**
**शरीके कारवां हूं मैं गुबारे कारवां होकर,**
**मेरे मिटने की मेरे कारवां तक बात आ पहुंची ।**
**मुझे जो मुस्कराकर अपने हाथों जाम बख्शा था,**
**इनायत थी मगर अब दासतां तक बात आ पहुंची ।**
**चमन वाले उठो आराई से महफिल का वक्त आया,**
**खिजां से अब बहारें देखीं यहां तक बात आ पहुंची ।**
**खिजायेदार हो तजबीज अब मेरे लिये शायद,**
**जो कह बैठा हूं वो पीरे मुबां तक बात आ पहुंची ।**

अब त सबैतिर कुरा फैलिइसक्यो, मलाई त यस कुरामा खुशी लाग्छ कि तिमीले बाहेक मेरो बारेमा अब अरूले सोच्ने हिम्मत गर्नै सक्दैन । मैले त केवल तिमीलाई पाउन र तिमीमा एकाकार हुनका लागि नै जीवन बिताइरहेकी थिएँ किनकि अब यस शरीरमा विरह नै विरह छ, अब यस शरीरमा आगो नै आगो छ ।

**विरहिण दियरे रैन-दिन बिन देखे दीदार,**
**यह काया जलती रहे जाग्या विरह अपार ।**

अब म कसलाई भरोसा गरूँ भन्ने कुराको अब मलाई कुनै ज्ञान रहेन–

**कांटों पर एतबार किया है कभी-कभी,**
**फूलों को शर्मसार किया है कभी-कभी ।**
**पैमाना-ए-बहार किया है कभी-कभी,**
**जलवों को आसगार किया है कभी-कभी ।**
**रहम आ गया तो इन पे मेरे जपते इश्क को,**
**आंखों को इश्कबार किया है कभी-कभी ।**
**रस्मो रिवाज इश्क का कायल नहीं मगर,**
**दामन को तार-तार किया है कभी-कभी ।**
**गो बेखबर नहीं हूं हकीकत से खार की,**
**फूलों पे एतबार किया है कभी-कभी ।**
**जो देवता भी पा न सके मैंने वो कदम चूमे हैं,**
**उनसे भी मैंने प्यार किया है कभी-कभी ।**
**सर आसमां पर तेरे झुकाये रहा मगर,**
**इनको सुपुर्दगार किया है कभी-कभी ।**
**मैं हूं तो कोई दूसरा कैसे हुआ कहीं,**
**मुझकों ही तूंने सुमार किया है कहीं-कहीं ।**

मैले जीवनमा काँडालाई पनि विश्वास गरेँ, दुश्मनको पनि विश्वास गरेँ । महसुस गरेँ शायद जीवनको कुनै उद्देश्य मिलोस्, जीवनको कुनै बाटो प्राप्त होस्, तर निश्चय गरिसकेँ कि मेरो जीवनको कुनै अरू उद्देश्य छँदैछैन । मीराले त स्पष्ट भनेकी थिइन्–

**मेरे तो गिरधर गोपाल दूसरो न कोई,**
**जा के सिर मोर मुकुट मेरो पति सोई ।**
**छोड़ देहि कुल की कानि का करिये कोई,**
**अंसुवन जल सींचि सींचि प्रेम बेल बोई,**
**अब तो बेल फैल गई आनन्द फल होई ।**

कुलको मर्यादालाई मैले छोडिसकेकी छु । जसो पर्ला तसो टर्ला । एकपटक त बदनाम हुनैछ । जब बदनाम हुनैछ भने आजै किन नहुने ? समय किन बर्बाद गर्ने ? प्रेमको जुन बेल मैले रोपेकी थिएँ, त्यसलाई त आँसुको जलले नै सिँच्नुपर्नेछ । यदि आँसु छ भने प्रेमको बेल बढ्नेछ र प्रेमको बेल बढ्नाले विरहको फल नै फल्नेछ...

**अंसुवन जल सींचि प्रेम बेल बोई,**
**अब तो बैल फैल गई आनन्द फल होई ।**

जीवनमा त आनन्द नै आनन्द छ किनकि यस आनन्दको पछाडि कसैको प्रतीक्षा लुकेको छ । अब मैले के गरूँ ? म चाहन्न कि मेरो आँखाबाट केही कुरा झल्कियोस् । म चाहन्न कि समाजले त्यसलाई पढोस्, केही कुरा बुझोस् । क्रमश:

# वर्षायाममा रोग वर्षाबाट बच्ने उपाय

हाम्रो नेपाली समाजमा एउटा प्रचलित भनाइ छ ‘रोग लागेर उपचार गर्नुभन्दा रोग लाग्न नै नदिनु उत्तम हुन्छ’ । यो भनाइ नबुझ्ने र नसुन्ने हामी कोही पनि छैनौँ होला । तर पनि दिनानुदिन बिरामीको संख्या आकासिँदै छ भने अर्कोतर्फ नयाँ नयाँ रोगहरू पनि जन्मिँदै छन् । यस्तो विकराल स्थितिमा हामीले अलिकति बढी चनाखो भएर कुन समयमा, ऋतुमा कुन कुन रोग लाग्ने सम्भावना हुन्छ र तिनीहरूबाट बच्न हामीले कस्ता उपायहरू अपनाउनुपर्दछ भन्ने कुरामा केही हदसम्म पनि ध्यान दियौँ भने हामी रोगहरूबाट बच्न सक्छौँ ।

कालगणनाअनुसार श्रावण र भाद्र महिनालाई वर्षा ऋतुमा राखिएको छ । यस ऋतुमा पानी बढी मात्रामा पर्ने र बाटो वरिपरिका ढलहरू हामीले खानेपानीको मुहानमा मिसिने सम्भावना बढी हुने हुनाले सरुवा रोगहरूको महामारी हुने सम्भावना प्रबल हुन्छ । तसर्थ जलवर्षासँगै हुने रोगवर्षाबाट बच्ने घरेलु तथा आयुर्वेदिक उपचारको बारेमा सामान्य जानकारी लिएर माथिको उखानलाई चरितार्थ पार्ने कि ?

१. **अतिसार अर्थात् झाडापखाला** : यसलाई अंग्रेजीमा Diarrhoea भन्छन् । सुन्दा अत्यन्तै सामान्य लागे पनि झाडापखालाकै कारणले वर्षेनी सयौँ बालबालिकाको मृत्यु भइरहेको छ । दूषित पानी, दूषित तथा बासी खानेकुराको सेवन गरेपछि विविध सूक्ष्म जीवाणुहरूको कारणले झाडापखाला हुने गर्दछ । लगातार पातलो दिसा दिनमा तीनपटकभन्दा बढी आउनुलाई सामान्यरूपमा झाडापखाला भनिन्छ । यसबाट बच्नको लागि हामीले पानी राम्ररी उमालेर खाने, बासी सडेगलेका खानेकुराहरू नखाने र आफ्नो व्यक्तिगत सरसफाइमा पनि ध्यान दिने गर्नुपर्दछ । उपचारको लागि धान्यपञ्चक चूर्ण ३ देखि ६ ग्राम पानीसँग बिहान बेलुका दिनुपर्दछ । त्यस्तै अन्य औषधिहरूमा भुवनेश्वरी वटी १ देखि २ गोली बिहान बेलुका, रामवाण रस १ गोली बिहान बेलुका, कुटजघन वटी १ देखि २ गोली बिहान बेलुकी सेवन गर्नुपर्दछ ।

२. **रुघा** : शरीरमा चिसोपन हुनुको साथै नाकबाट पानी आइरहने रोगलाई रुघा, सर्दी भनिन्छ । वर्षा याममा परेको पानीमा बढी भिज्नाले, बच्चाहरूले पानी पर्दा पनि खेलिरहने गर्दा रुघा लाग्ने सम्भावना हुन्छ ।

**बच्ने उपाय** : परेको पानीमा नरुझ्ने, सफा र उमालेको पानी खाने, धूलो र धूवाँबाट बच्ने, न्यानो लुगा लगाउने । यदि पानीमा भिजेको भए तत्काल शरीर पुछेर सफा र सुख्खा राख्ने ।

**उपचार** : अदुवा, मरीच, सख्खर राखी पकाएको तातो पानी दिनमा ३-४ पटक खानुपर्दछ । रुघाका साथै ज्वरो पनि भएमा सुकेको तुलसीको पत्र स्वरस १ चम्चा, मनतातो पानी १ लिटरमा छोपेर १ घण्टासम्म राख्ने र त्यसपछि छानेर त्यो पानी दिनमा दुईपटक खान दिने ।

३. **जुका (कृमी रोग)** : जथाभावी फोहोर पानी आदि खानाले तथा शरीरको सरसफाइ राम्ररी नगर्नाले पेटमा जुका पर्दछ । जुका माटो, खानेकुरा, पानी र फोहोर हातबाट सर्दछ ।

लक्षणहरू : रुघाखोकी लाग्दछ, खाना खान रुच्दैन, पेट बटारिएर दुःख्छ, सामान्य ज्वरो हुन सक्दछ, दिसा पातलो भई पखाला लाग्दछ, जीउ दुब्लाउँदै जान्छ, रगतको कमीले शरीर पहेँलो देखिन्छ । अति धेरै जुका भएपछि मुखबाट अथवा मलद्वारबाट जुका आउन थाल्दछ ।

**रोकथाम तथा उपचार** : पानी उमालेर खाने गर्नुपर्दछ । हातखुट्टा राम्ररी धुने बानी गर्नुपर्दछ । खाना राम्ररी पकाएर खानुपर्दछ । दिसा गरेपछि सफासित साबुन पानी वा खरानी पानीले हात धुने गर्नुपर्दछ ।

**आयुर्वेद उपचार** : बिहान वायुविडङ्गको चूर्ण एक चम्चा खाई मोही पिउने । अथवा ज्वानोको चूर्ण एक चम्चा मनतातो पानीसँग खान दिने ।

४. **आऊँ** (Dysentry): यो पाचनसम्बन्धी रोग हो । यो दूषित पानी वा खाना आदिबाट सर्दछ । अमिवा भन्ने जीवाणुको कारण यो रोग लाग्दछ ।

**लक्षणहरु** : कहिलेकाहीँ पखाला लाग्ने अनि निको हुने हुन्छ । पेट कटक्क काटेझैँ दुःख्छ र कहिलेकाहीँ दिसामा रगत पनि मिसिएको हुन्छ । सिकिस्त अवस्थामा धेरै रगत जान्छ । यो रोग लागेको मानिस निकै बिरामी र कमजोर देखिन्छ ।

**रोकथाम तथा उपचार** : उमालेको पानी पिउनुपर्दछ । खाना खानु अगाडि राम्ररी हात धुनुपर्दछ । पानी र खानेकुरालाई छोपेर सुरक्षित राख्नुपर्दछ । जाँड, रक्सी आदि नखानाले पनि आउँबाट बच्न सकिन्छ । सुपको

धूलो एक ठूलो चम्चा १० ग्राम दिनको तीनपटक पानीसित खाने । कुटजको बोक्राको धूलो १ ठूलो चम्चा दिनको तीनपटक पानीसित खाने । काँचो बेलको धूलो एक चम्चा दिनको तीनपटक पानीसँग खाने ।

**५. कमलपित्त अर्थात् पहेँले रोग** (Jaundice): आँखा, नङलगायत पूरै शरीर पहेँलो देखिने रोगलाई पहेँले रोग अर्थात् कमलपित्त भनिन्छ । यो रोगमा रगतमा पित्त मिसिएर शरीरभरि फैलिन्छ । यो रोग लागेपछि खाना रुच्दैन, वाक्वाक् लाग्दछ, मन्द ज्वरो आउँछ, कलेजो सुन्निन्छ, पेटको दाहिने भागमा दु:ख्दछ ।

**कारण** : दूषित पानी र खाना खानाले । जण्डिस भएको रोगीको संगत गर्नाले । बढी मात्रामा पिरो, अमिलो खानाहरू खानाले । बढी मात्रामा शारीरिक तथा मानसिक तनाव उठाउनाले ।

**रोकथाम तथा उपचार** : मूलाको कलिलो पात पखाली त्यसको रस निकाल्ने र त्यो रस १ कपमा चिनी ३० ग्राम राखेर बिहान खान दिने । एक एक चम्चा मह दिनको ३ पटक पानीमा मिसाएर खाने । फलहरूमा काँक्रो, स्याउ, मूला, मेवा, अंगुर, गाजर साथै उखुको रस खान दिनुपर्दछ । चिल्लो पदार्थ प्रयोग गरिएका, तारेका, भुटेका खानेकुराहरू, पीरो, अमिलो, रक्सी, माछा, मासु, फुलहरू खान दिनुहुँदैन । दूषित पानी र खाना नखाने । बढी तनाव नलिने, पर्याप्त आराम गर्ने ।

विभिन्न पुस्तकहरूमा जण्डिस रोगका सयौँ उपचार विधिहरूको बारेमा बताइएको पाइन्छ । जताततै जण्डिसको उपचार गरिन्छ भनेर प्रचार गरिएको पनि पाइन्छ तर यो रोग लागिसकेपछि जथाभावी उपचार गरेर औषधि खानु हुँदैन । यसबाट रोग निको हुनुको सट्टा झन् बिग्रन सक्दछ । त्यसैले कुन प्रकारको जण्डिस लागेको हो, रगतमा जण्डिससँग सम्बन्धित तत्त्व बिलुरुबिनको मात्रा कति छ, रोग कुन अवस्थामा छ, यी यावत् कुराहरूको जानकारी लिएर मात्र उपचार गर्नुपर्दछ । यसको लागि सक्षम आयुर्वेद चिकित्सकसँग परामर्श लिएर, रगतहरूको जाँच गरेर मात्र उपचार गर्न र औषधि खान सकिन्छ ।

**६. आँखा पक्ने रोग** : यो आँखामा हुने सरुवा रोग हो । यसलाई संस्कृतमा अभिष्यन्द भनिन्छ । आँखालाई ढाक्ने श्लैष्मिक कलामा जीवाणुको संक्रमण भएर यो रोग लाग्दछ । यो रोग सामान्य खालको हो र उपचार गर्दा निको हुन्छ । समयमा उपचार नगरेको खण्डमा आँखाको बीचमा घाउ पनि हुन सक्छ ।

धूलो, धूवाँ, चिसो आदिको सम्पर्क भइरहने मानिसमा आँखामा बल पर्दा आँखा रातो हुँदै जान्छ र यो रोग देखिन्छ ।

**लक्षणहरु** : आँखा रातो हुन्छ, आँसु बढी आउँछ, आँखा सुन्निएजस्तो हुन्छ, आँखा बढी दु:ख्दछ, केही समयपछि बढी चिप्रा लाग्ने र आँखा टपक्क टाँसिने हुन्छ ।

**उपचार** : आयुर्वेदअनुसार पाँचप्रकारका पित्तहरूमध्ये आलोचक पित्त आँखामा स्थित हुन्छ । यही पित्त प्रकुपित हुनाले आँखा पक्ने रोग लाग्दछ । यसको मुख्य उपचारमा निम्न तरीका अपनाउनुपर्दछ–

१. मनतातो पानीले आँखा धुनुपर्दछ ।

२. बेलुका १ चिया गिलास सफा पानीमा ३ ग्राम त्रिफला चूर्ण भिजाएर राख्ने र बिहान उक्त पानीलाई बिस्तारै अर्को सफा गिलासमा राख्ने र पुन: सेतो सफा कपडाले छान्ने । यसरी प्राप्त भएको पानी सफा सिसीमा भर्ने र दैनिकरूपमा आँखा पखाल्ने । सात दिनपछि पुन: अर्को पानी यसरी नै बनाउन सकिन्छ ।

३. पेटलाई सफा गर्न, खाली गर्न विभिन्न विरेचक द्रव्यहरू जस्तै: त्रिफला चूर्ण, पञ्चसकार चूर्ण आदि राति सुत्ने बेलामा १ चम्चा मनतातो पानीसँग खाने ।

४. यष्टिमधु चूर्ण ३ ग्राम वा सप्तामृत लौह १ चक्की दिनको दुईपटक एक हप्तासम्म सेवन गर्ने ।

यो एक प्रकारको सरुवा रोग हो । अत: रोग लागेको व्यक्तिसँग कुनै पनि प्रकारको सहचर्य नगर्नु नै रोग लाग्नबाट बच्ने प्रमुख आधार हो । साथै रोगीले पनि कालो चश्मा लगाउनु पर्दछ । जय गुरुदेव !

# आफ्नो हात आफै हेरौँ

यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार मानिसको हातमा रहेका विभिन्न पर्वतहरूको बारेमा हामीले चर्चा गर्दै आइरहेका छौँ । प्रत्येक पर्वतको आफ्नै महत्त्व र स्वभाव रहेको हुन्छ जसअनुसार यस अंकमा जोडी पर्वतहरूको फलको बारेमा चर्चा गरिएको छ । यो लेख पढेर तपाईं पनि आफ्नो हातमा रहेका पर्वतहरूको स्थितिबारे अध्ययन गरी आफ्नो स्वभावबारे जान्न सक्नुहुन्छ । यस स्तम्भको बारेमा कुनै प्रतिक्रिया भए हामीलाई पठाउन सक्नुहुनेछ ।

## पर्वत-युग्म एवं हस्त-चिह्न

हत्केलामा पर्वतहरूको अध्ययन हामीले अगाडिको अध्यायमा गरिसक्यौँ । अधिकांश हत्केलामा एकभन्दा बढी पर्वतहरू विकसित भएका देखिन्छन् । यस्तो स्थितिमा ती दुवै पर्वतहरूको मिश्रित फल व्यक्तिको जीवनमा प्राप्त हुन्छ । पाठकहरूका लागि यो फल प्राप्त गर्नु केही कठिनजस्तै हुन्छ । यसैले सुविधाका लागि तल पर्वत-युग्महरूको फल स्पष्ट गरिन्छ–

**१. गुरु :**

गुरु र शनि: उत्तम भाग्यवर्द्धक

गुरु र सूर्य: श्रेष्ठ धन, सम्मान, पद प्राप्ति

गुरु र बुध: ज्योतिष ज्ञानमा रुचि तथा काव्यशास्त्र आदिमा विशेष सफलता

गुरु र मंगल: पराक्रम, साहस, नीति-निपुणता तथा रण-संचालन योग्यता

गुरु र नेपच्यून: श्रेष्ठ विचार, उत्तम धन प्राप्ति

गुरु र हर्षल: विज्ञानमा रुचि, परोपकारको भावना

गुरु र प्लूटो: श्रेष्ठ वक्ता, उर्वर मस्तिष्क, विलक्षण प्रतिभा

गुरु र राहु: दुष्ट विचार तथा आत्मविश्वासमा कमी

गुरु र केतु: जीवनमा बाधा, दिक्दारी एवं असफलताहरू

गुरु र चन्द्र: गम्भीरता तथा प्रभावपूर्ण व्यक्तित्व

गुरु र शुक्र: आकर्षक व्यक्तित्व एवं सम्मोहनको विशेष योग्यता तथा मानवलाई पूर्ण प्रभावित गर्ने क्षमता ।

**२. शनि :**

शनि र सूर्य: तर्कशक्ति, चिन्तन तथा वैज्ञानिक भावनाको विकास

शनि र बुध: निर्णय लिने क्षमता तथा परोपकारको भावना

शनि र शुक्र: स्वार्थी, रसिक तथा प्रेममा सबैथोक लुटाउने

शनि र राहु: उत्तम गुणले युक्त एवं जीवनमा आकस्मिक धनलाभ गर्ने

शनि र केतु: आजीविकाको चिन्ता एवं मानसिक दिक्दारी

शनि र नेपच्यून: जीवनमा कैयौँपटक विदेश यात्रा

शनि र हर्षल: एकान्तप्रिय तथा विविध कलाहरूमा निपुणता ।

शनि र प्लूटो: चातुर्य, विवेकशीलता तथा तेजस्विता

शनि र चन्द्र: रहस्यमय एवं गोपनीय व्यक्तित्व

शनि र मंगल: लडाकू प्रवृत्ति तथा क्रोधित भएमा सबैथोक विध्वंस गरिदिने प्रवृत्ति ।

**३. सूर्य :**

सूर्य र बुध: विज्ञानमा रुचि तथा अन्तर्राष्ट्रिय स्तरमा व्यापार गर्ने क्षमता

सूर्य र शुक्र: योजनाबद्धरूपमा कार्य गर्ने

सूर्य र राहु: जीवनमा बारम्बार दु:ख, चिन्ता एवं अशान्ति भोग्ने
सूर्य र केतु: विदेश यात्राहरू
सूर्य र हर्षल: उच्चस्तरीय प्रसिद्धि एवं ज्ञान तथा विवेकको विकास
सूर्य र नेपच्यून: सोचविचार गरी योजना बनाउने
सूर्य र प्लूटो: धीर-गम्भीर व्यक्तित्व
सूर्य र चन्द्र: आडम्बर तथा कृत्रिमतामा विश्वास राख्ने
सूर्य र मंगल: आत्मोत्सर्गको प्रबल भावना ।

**४. बुध :**
बुध र शुक्र: विपरीत लिङ्गप्रति तथा संगीतप्रति विशेष रुचि
बुध र राहु: क्रोधी तथा चिड्चिडे स्वभाव
बुध र केतु: यात्रा, प्रेमी तथा मानवीय दृष्टिले सफल
बुध र हर्षल: कल्पनाप्रिय
बुध र नेपच्यून: परोपकारी तथा विश्वको कल्याण कामना गर्ने
बुध र प्लूटो: अन्तर्राष्ट्रिय सफलता प्राप्त गर्ने व्यापारी
बुध र चन्द्र: वैज्ञानिक प्रतिभासम्पन्न दूरदर्शी व्यक्तित्व
बुध र मंगल: तुरुन्त एवं सही निर्णय लिने व्यक्ति ।

**५. शुक्र :**
शुक्र र चन्द्र: प्रेम भावनाको तीव्रता तथा कला प्रेम
शुक्र र राहु: निम्नस्तरका स्त्रीहरूसँगको सम्बन्ध
शुक्र र केतु: सहृदयता एवं उच्च भावनाको विकास
शुक्र र हर्षल: प्रेममा तीव्रता
शुक्र र नेपच्यून: उच्चकोटिको कला प्रेम र मनुष्य मात्रमा स्नेह
शुक्र र प्लूटो: जीवनका बाधाहरूलाई बुझ्ने र ती बाधाहरूलाई परास्त गर्ने
शुक्र र मंगल: संगीतको ज्ञानमा पूर्णता ।

**६. चन्द्र :**
चन्द्र र मंगल: समुद्रपारको यात्रा
चन्द्र र राहु: मित्रहरूबाट विश्वासघात
चन्द्र र केतु: यौवनावस्थामा प्रेम प्रसङ्गबाट बदनामी
चन्द्र र हर्षल: मानवीय भावनाको विकास
चन्द्र र नेपच्यून: वैरागी भावना
चन्द्र र प्लूटो: प्रबल कामशक्ति ।

**७. राहु :**
राहु र केतु: आजीविकाका लागि कठोर प्रयत्न
राहु र हर्षल: दु:खमय जीवन
राहु र नेपच्यून: विदेशमा बस्ने स्त्रीसँग विवाह
राहु र प्लूटो: अपराधवृत्तिको विकास ।

**८. केतु :**
केतु र हर्षल: अत्याचारको भावना
केतु र नेपच्यून: ज्ञानशून्यता
केतु र प्लूटो: सम्मान वृद्धि ।

**९. हर्षल :**
हर्षल र प्लूटो: वैज्ञानिक प्रतिभाको विकास
हर्षल र नेपच्यून: विदेश गमन, उच्च पद प्राप्ति ।

**१०. नेपच्यून :**
नेपच्यून र प्लूटो: तीव्र कामान्धता ।
क्रमश:

जय गुरुदेव !

## २०६६ श्रावण महिनामा पर्ने चाडपर्व

| श्रावण महिनाभर श्री शिव गोरक्ष महोत्सव | |
|---|---|
| श्रावण १ गते | **तान्त्रोक्त वगलामुखी हवन,**<br>**तान्त्रोक्त महर्षि वेदव्यास हवन** |
| श्रावण ३ गते | कामदा एकादशी |
| श्रावण ४ गते | प्रदोषव्रत |
| श्रावण ५ गते | **श्री शिव गोरक्ष हवन**<br>घण्टाकर्ण चतुर्दशी, गठेमंगल |
| श्रावण ६ गते | **दिव्य गुरु महोत्सव,**<br>**तान्त्रोक्त वटुक भैरव हवन** |
| श्रावण ७ गते | **तान्त्रोक्त महालक्ष्मी हवन,** सूर्य ग्रहण<br>**तान्त्रोक्त विन्ध्यवासिनी हवन** |
| श्रावण ९ गते | वराह जयन्ती |
| श्रावण ११ गते | नागपञ्चमी |
| श्रावण १२ गते | कल्की जयन्ती |
| श्रावण १४ गते | अष्टमी, गोरखकाली पूजा |
| श्रावण १७ गते | पुत्रदा एकादशी |
| श्रावण १९ गते | प्रदोष व्रत |
| श्रावण २१ गते | जनै पूर्णिमा (ऋषितर्पणी) रक्षाबन्धन |
| श्रावण २२ गते | गाईजात्रा |
| श्रावण २९ गते | कृष्ण जन्माष्टमी, गोरखकाली पूजा |
| श्रावण ३२ गते | अजा एकादशी |

**प्रत्येक बृहस्पतिबार बिहान १० :०० बजे-गुरू पूजन**
**प्रत्येक दिन साँझ ५ :०० बजे-आरती**

# परमपूज्य सद्‌गुरुदेवको अवतरण यात्रा

**यस स्तम्भअन्तर्गत परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको रहस्य नै रहस्यले भरिएको अवतरण यात्रालाई क्रमशः प्रकाशित गर्दै आएका छौं । आशा छ यसबाट पाठकवर्ग लाभान्वित हुनुहुनेछ ।**

## श्रेष्ठ वेदान्ती एवं अद्‌भुत कर्मकाण्डी

वेद, वेदमन्त्र तथा वैदिक चिन्तनको सटीक ज्ञान गुरुदेवसँग जति छ, त्यसभन्दा बढी आज यस धर्तीमा कसैसँग पनि छैन । यति धेरै धुरन्धर विद्वान् तथा ज्ञानी भएर पनि गुरुदेव अत्यन्तै सरल र सहजरूपमा सेवार्थ उपलब्ध हुनुहुन्छ ।

एकपटक बनारस (वाराणसी) स्थित हिन्दु विश्वविद्यालयको प्रांगणमा यज्ञ गर्न गुरुदेव आउनुभएको थियो । त्यसबेला बनारसका सम्पूर्ण पण्डितहरूले उहाँलाई चुनौति दिए– 'कि त हामीसँग शास्त्रार्थ गर्नुहोस्, होइन भने यो यज्ञ वाराणसीबाहिर अन्यत्रै गर्नुहोस् ।' गुरुदेवले उनीहरूको चुनौतिलाई स्वीकार गरेर मञ्चबाट अथर्ववेदको १८ पृष्ठको पहिलो गोप्यमन्त्रको स्पष्ट उच्चारण गर्नुभयो । उहाँले पण्डितहरूलाई मन्त्र दोहोऱ्याउन भन्नुभयो । उपस्थित सबै पण्डित चुपचाप भए । उनीहरूले स्वीकार गरे– डा. श्रीमालीज्यूको ज्ञानको अगाडि आज सारा विद्वत् समाज पनि केही होइन, अबोध छ ।

यज्ञ यति दुरुह विषय हो जसलाई बुझ्न अनि सम्पन्न गराउन ज्यादै कठिन हुन्छ । शास्त्रहरू धेरै प्रमाण अनि चिन्तनले भरिएका छन् । ती प्रमाणहरूबाट यज्ञ प्रक्रियालाई पूर्णरूपमा बुझ्न तथा यसको मर्म पत्ता लगाउन असम्भव नै छ भन्ने बोध हुन्छ । पुत्र प्राप्तिको लागि पुत्रेष्टि यज्ञ सम्पन्न गरिन्छ भने गृह-कलह शान्तिको लागि शान्ति यज्ञ, शत्रु बाधा नाशहेतु विजय यज्ञ सम्पन्न गरिन्छ भने आध्यात्मिक उन्नतिहेतु वाजपेय-अश्वमेध यज्ञ । यी सबै यज्ञ हुन् तर प्रत्येकका विधि-विधान एवं प्रक्रियाहरू फरक-फरक छन् । गुरुदेवले स्थापना, पूजन, ऊर्ध्वमुखीकरण,

वेदी निर्माण आदि सम्पूर्ण जटिलतम प्रक्रियाहरूलाई स्पष्ट पारी सर्वसुलभ गराइदिनुभयो । पहिले यज्ञमा दिइएको आहुति अग्निदेवद्वारा मात्र देवताकहाँ पुग्दछ भन्ने धारणा थियो, गुरुदेवले अग्निकुण्डमा देवता स्वयं उपस्थित भई आहुति ग्रहण गर्दछन् भन्ने कुरा प्रत्यक्ष प्रमाणित गरेर देखाइदिनुभयो । गुरुदेवले कुरुक्षेत्रमा यज्ञको आयोजना गर्नुहुँदाको कुरा उल्लेखनीय छ । जब लक्ष्मी मन्त्रद्वारा आहुति दिइँदै थियो, त्यसबेला अग्निकुण्डको फोटो पनि खिचिएको थियो । घोर आश्चर्य ! शिरमा मुकुट धारण गर्नुभएको, आँचल हावामा लहराएको, शरीरमा धोती धारण गर्नुभएको एउटा अग्लो गतिशील स्त्रीस्वरूप (माता लक्ष्मी) को चित्र क्यामेरामा कैद भयो । कर्मकाण्डको संसारमा यो कम हलचल गर्ने घटना थिएन । यसबाट यज्ञको वास्तविकता, प्रामाणिकता तथा सिद्धहस्तता पनि सिद्ध हुन गयो । यो खोज सबैको लागि वरदान थियो ।

गुरुदेवको ज्ञानको एक थोपा मात्र पाए पनि हाम्रो जीवन धन्य हुन्छ । परमपूज्य सद्गुरुदेवको श्रीचरणकमलमा बसेर वेदान्त, मीमांसा तथा कर्मकाण्डको बारेमा थोरै मात्र ज्ञान हासिल गर्न सकियो भने पनि यो जीवनको श्रेष्ठ उपलब्धि मानिनेछ । जय गुरुदेव !

# श्रावण महिनाको सूक्ष्म काल विवरण

**आदरणीय पाठकवृन्द, विभिन्न महिनाका विभिन्न बारहरुमा पर्ने कालहरुको जानकारी तथा सूक्ष्म काल निर्णयका सम्बन्धमा विगतका अङ्कहरूमा प्रकाशित गरिएको थियो। यस अंकमा श्रावण महिनामा पर्ने विभिन्न चारवटा कालहरुको पनि ५-५ मिनेटको अन्तरालको फलहरुलाई प्रस्तुत गरिएको छ जसलाई हेर्न सँगै दिइएको तालिकालाई आधार बनाउनु होला।**

## श्रावण महिनाको महेन्द्र काल

१ देखि ५ मिनेटसम्म : कुनै पनि प्रकारको उन्नति, व्यापार, जागिर, यात्रा आदिका लागि यस समयलाई छनौट गर्नु शुभ मानिएको छ। यस समयकी अधिष्ठात्री 'गौरी' हुन्, हरिद्रा खानु शुभ मानिएको छ।

६ देखि १० मिनेटसम्म : व्यापार, सफलता, शिक्षा, खेल, प्रणय प्रसङ्ग, विवाह तथा यात्रा आदिका लागि यस समयलाई छनौट गर्नुपर्दछ। यस समयका देवता 'गौतम' हुन्, पान चपाएर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ।

११ देखि १५ मिनेटसम्म : यात्रा, शुभ कार्य, कुरा छिन्ने, विवाह, माङ्गलिक कार्य, व्यापारिक कार्य, जुवा आदिका लागि यो समय अनुकूल र शुभ छ। यस समयका देवता 'चन्द्र' हुन्, दही खानु शुभ मानिएको छ।

१६ देखि २० मिनेटसम्म : कुनै पनि प्रकारको यात्रा एवं सफलताका लागि यो समय विशेष शुभ एवं अनुकूल छ। यस समयका देवता 'सूर्य' हुन्, सख्खर खाएर यात्रा अथवा कार्य प्रारम्भ गर्नुपर्दछ।

२१ देखि २५ मिनेटसम्म : उन्नति कार्य, विवाह, प्रणय, प्रेम प्रदर्शन, लाभ कार्य, खेल, यात्रा आदिका लागि यो समय शुभ छ। यस समयका अधिष्ठाता 'कामदेव' हुन्, मह खाएर कार्य प्रारम्भ गरियो भने विशेष शुभ रहन्छ।

२६ देखि ३० मिनेटसम्म : यात्रा, विवाह, व्यापार कार्य, मित्रता, उन्नति कार्य आदिका लागि यस समयको छनौट गर्नुपर्दछ। यस समयका अधिष्ठात्रा 'मरुत' हुन्, तिल खानु शुभ मानिएको छ।

३१ देखि ३५ मिनेटसम्म : भाग्योदय, चुनाव, परीक्षा दिने, सफलतासम्बन्धी कार्य, स्थिर कार्य, भाग्योदयका लागि यस समयको छनौट गर्नुपर्दछ। यस समयका स्वामी 'विष्णु' हुन्, चामल खाएर कार्य प्रारम्भ गर्नु विशेष शुभ मानिएको छ।

३६ देखि ४० मिनेटसम्म : यात्रा, जुवा, हानि-लाभ, सट्टा, भाग्य परीक्षा, मित्रता, लाभदायक कार्य आदिका लागि यो समय उचित छ। यस समयका स्वामी 'कार्तवीर्यार्जुन' हुन्, दही खानु शुभ मानिएको छ।

४१ देखि ४५ मिनेटसम्म : यात्रा, विजय कार्य, धन संग्रह, किनमेल र शुभ कार्यका लागि यो समय अनुकूल छ। यस समयका अधिष्ठाता 'ब्रह्मा' हुन्, पान खाएर कार्य प्रारम्भ गर्नु शुभ रहन्छ।

४६ देखि ५० मिनेटसम्म : व्यापार कार्यका लागि यो समयको छनौट विशेष शुभ रहन्छ, यस समयकी अधिष्ठात्री 'लक्ष्मी' हुन्, दूध प्रसाद खाएर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ।

५१ देखि ५५ मिनेटसम्म :शुभ कार्य एवं व्यापारका लागि सर्वथा अनुकूल छ। यस कालका स्वामी 'शिव' हुन्, कार्य प्रारम्भ गर्नुपूर्व धनियाँ खानु अनुकूल रहन्छ।

५६ देखि ६० मिनेटसम्म : यात्राको दृष्टिबाट यस समयको विशेष महत्त्व छ, यस समयका अधिष्ठाता 'गणेश' हुन्। अत: गणेशको स्मरण गरेर यात्रा प्रारम्भ गर्नुपर्दछ। दूबो चपाउनु शुभ मानिएको छ।

## श्रावण महिनाको अमृत काल

१ देखि ५ मिनेटसम्म : जुवा, व्यापार, व्यवसायका लागि यात्रा, यज्ञ, पूजन, अनुष्ठान आदिका लागि यो समय शुभ छ। यस समयका देवता 'शिव' हुन्, चामलको प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ।

६ देखि १० मिनेटसम्म : यात्रा, महत्त्वपूर्ण र उन्नति कार्यहरूका लागि यस समयको छनौट राम्रो हुन्छ। यस समयका देवता 'रुद्र' हुन्, कार्य प्रारम्भ गर्नु अगाडि सख्खरको प्रयोग शुभ मानिएको छ।

११ देखि १५ मिनेटसम्म : यात्रादिका लागि सर्वाधिक उपयुक्त समय छ। यस समयकी अधिष्ठात्री देवी 'सरस्वती' हुन्, मुगीको दाना चबाएर यात्रा प्रारम्भ गर्नु शुभ रहन्छ।

१६ देखि २० मिनेटसम्म : परीक्षा, चुनाव, अन्तर्वार्ता तथा यात्रा आदिका लागि समय शुभ छ। यस समयका अधिष्ठाता 'चन्द्र' हुन्, दही खाँदा शुभ हुन्छ।

२१ देखि २५ मिनेटसम्म : कुनै पनि व्यापार कार्यका

# चैत्र, वैशाख, श्रावण, भाद्र, माघ र फाल्गुण महिनामा पर्ने विभिन्न कालहरू

| आइतबार | | सोमबार | | मंगलबार | | बुधबार | | बिहीबार | | शुक्रबार | | शनिबार | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* |
| ६:००-६:४८दिन | महेन्द्र | ६:००-७:३६दिन<br>*७:३०-९:००* | अमृत<br>*राहु* | ६:००-८:२४दिन | अमृत | ६:००-७:३६दिन | वक्र | ६:००-८:२४दिन | अमृत | ६:००-६:४८दिन | शून्य | ६:००-७:३६दिन | शून्य |
| ६:४८-१०:०० | अमृत | ७:३६-१०:४८<br>*७:३०-९:००* | वक्र<br>*राहु* | ८:२४-९:१२ | शून्य | ७:३६-९:१२ | अमृत | ८:२४-९:१२ | शून्य | ६:४८-१:१२<br>*१०:३०-१२:००* | अमृत<br>*राहु* | ७:३६-८:२४ | वक्र |
| १०:००-२:०० | वक्र | १०:४८-१:१२ | अमृत | ९:१२-१०:०० | वक्र | ९:१२-११:३६ | वक्र | ९:१२-१०:४८ | शून्य | १:१२-४:२४ | वक्र | ८:२४-९:१२<br>*९:००-१०:३०* | शून्य<br>*राहु* |
| २:००-५:१२<br>*४:३०-६:००* | शून्य<br>*राहु* | १:१२-३:३६ | वक्र | १०:००-१२:२४ | अमृत | ११:३६-१:१२<br>*१२:००-१:३०* | अमृत<br>*राहु* | १०:४८-१:१२ | अमृत | ४:२४-५:१२ | अमृत | ९:१२-१२:२४<br>*९:००-१०:३०* | अमृत<br>*राहु* |
| ५:१२-६:००<br>*४:३०-६:००* | अमृत<br>*राहु* | ३:३६-५:१२ | अमृत | १२:२४-३:३६<br>*३:००-४:३०* | शून्य<br>*राहु* | १:१२-२:००<br>*१२:००-१:३०* | शून्य<br>*राहु* | १:१२-४:२४<br>*१:३०-३:००* | वक्र<br>*राहु* | ५:१२-६:०० | शून्य | १२:२४-१:१२ | शून्य |
| ६:००-६:४८रात्रि | शून्य | ५:१२-६:०० | शून्य | ३:३६-५:१२<br>*३:००-४:३०* | अमृत<br>*राहु* | २:००-३:३६ | वक्र | ४:२४-६:०० | अमृत | ६:००-७:३६रात्रि | वक्र | १:१२-२:०० | वक्र |
| ६:४८-७:३६ | महेन्द्र | ६:००-७:३६रात्रि | वक्र | ५:१२-६:०० | शून्य | ३:३६-४:२४ | महेन्द्र | ६:००-७:३६रात्रि | वक्र | ७:३६-८:२४ | शून्य | २:००-३:३६ | शून्य |
| ७:३६-८:२४ | शून्य | ७:३६-९:१२ | महेन्द्र | ६:००-७:३६रात्रि | वक्र | ४:२४-६:०० | अमृत | ७:३६-९:१२ | महेन्द्र | ८:२४-१०:४८ | अमृत | ३:३६-५:१२ | अमृत |
| ८:२४-१०:०० | अमृत | ९:१२-१०:०० | अमृत | ७:३६-९:१२ | महेन्द्र | ६:००-६:४८रात्रि | शून्य | ९:१२-१०:०० | अमृत | १०:४८-१:१२ | वक्र | ५:१२-६:०० | शून्य |
| १०:००-१०:४८ | शून्य | १०:००-१:१२ | वक्र | ९:१२-१०:०० | अमृत | ६:४८-९:१२ | अमृत | १०:००-१:१२ | वक्र | १:१२-३:३६ | महेन्द्र | ६:००-८:२४रात्रि | वक्र |
| १०:४८-१:१२ | वक्र | १:१२-२:४८ | अमृत | १०:००-१२:२४ | वक्र | ९:१२-१०:४८ | महेन्द्र | १:१२-२:४८ | अमृत | ३:३६-४:२४ | शून्य | ८:२४-१०:४८ | अमृत |
| १:१२-३:३६ | शून्य | २:४८-४:२४ | शून्य | १२:२४-२:०० | अमृत | १०:४८-१२:२४ | वक्र | २:४८-४:२४ | शून्य | ४:२४-६:०० | अमृत | १०:४८-१२:२४ | वक्र |
| ३:३६-४:२४ | महेन्द्र | ४:२४-५:१२ | वक्र | २:००-२:४८ | शून्य | १२:२४-२:०० | शून्य | ४:२४-६:०० | अमृत | | | १२:२४-२:०० | शून्य |
| ४:२४-६:०० | अमृत | ५:१२-६:०० | शून्य | २:४८-३:३६ | वक्र | २:००-६:०० | अमृत | | | | | २:००-३:३६ | अमृत |
| | | | | ३:३६-४:२४ | महेन्द्र | | | | | | | ३:३६-४:२४ | शून्य |
| | | | | ४:२४-६:०० | अमृत | | | | | | | ४:२४-६:०० | अमृत |
| परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमाली (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) द्वारा रचित *'ज्योतिष और काल निर्णय'* पुस्तकमा आधारित । | | | | | | | | | | | | | |

**महेन्द्रकाल– सर्वश्रेष्ठ, अमृतकाल– श्रेष्ठ, वक्रकाल– सामान्य, शून्यकाल– निकृष्ट । शुभकालमा राहुकाल पनि मिसिएको छ भने त्यो समय पनि आफैँ अशुभ हुन्छ ।**

सूक्ष्म काल विवेचना गर्नुपर्दा– सर्वप्रथम कुन बार हो र कति बजेको विवेचना गर्नु छ, त्यसअनुसार कुन काल परेको छ (महेन्द्रकाल, अमृतकाल, वक्रकाल वा शून्यकाल) त्यो तालिका हेरेर पत्ता लगाउनु पर्दछ । उदाहरणका लागि २०६६ श्रावण २५ गते आइतबार बिहान ७:५५ बजेको सूक्ष्म विवेचना गरौँ । आइतबार प्रात: ६:४८ देखि १०:०० बजेसम्म अमृतकालको समय छ । हाम्रो समय अमृतकालमा परेको छ । अब हाम्रो समय ७:५५ बाट हाम्रो काल शुरु भएको समय ६:४८ घटाऔँ । बाँकी रह्यो १:०७ अर्थात् १ घण्टा ७ मिनेट । अब घण्टा जति भए पनि त्यसलाई छोडिदिएर मिनेटमा मात्र विचार गर्नुहोस्- ७ मिनेट । त्यसपछि चैत्र महिनाको अमृतकालमा ७ मिनेट कहाँ पर्दछ हेर्नुहोस् । त्यहाँ लेखिएको छ– **६ देखि १० मिनेटसम्म : यात्रा, महत्त्वपूर्ण र उन्नति कार्यहरूका लागि यस समयको छनौट राम्रो हुन्छ । यस समयका देवता 'रुद्र' हुन्, कार्य प्रारम्भ गर्नु अगाडि सख्खरको प्रयोग शुभ मानिएको छ ।** अब यहाँ लेखिएअनुसार गर्न सक्नुहुनेछ ।

लागि यो समय शुभ छ । यसका देवता 'नृसिंह' हुन्, लड्डुको प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

२६ देखि ३० मिनेटसम्म : जुवा, व्यापार, यात्रा आदिका लागि समय उपयुक्त छ । यस समयका देव 'शनि' हुन्, तिल खाएर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

३१ देखि ३५ मिनेटसम्म : जुवा, व्यापार प्रारम्भ गर्न, कुनै पनि घर वा पसलको मुहूर्त आदिका लागि यो शुभ समय हो । यसका देवता 'विष्णु' हुन्, चिनी खानु शुभ हुन्छ ।

३६ देखि ४० मिनेटसम्म : यात्रा, स्थायित्वसम्बन्धी कार्य, व्यापार प्रारम्भ मुहूर्त आदिका लागि यस समयको छनौट शुभ छ । यस समयकी देवी 'लक्ष्मी' हुन्, दूध प्रसाद खाएर गरेर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

४१ देखि ४५ मिनेटसम्म : यात्राका लागि यो समय शुभ छ । यसका देवता 'गणपति' हुन्, सख्खरको प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

४६ देखि ५० मिनेटसम्म : स्थायी कार्य, व्यापार, उन्नति तथा यात्रादिका लागि शुभ समय छ । यस समयकी अधिष्ठात्री 'गौरी' हुन्, दूबो चपाउनु शुभ रहन्छ ।

५१ देखि ५५ मिनेटसम्म : यात्रा, व्यापार, उन्नति कार्य एवं समस्त शुभ कार्यका लागि यो समय उपयुक्त छ । यसका प्रधान देव 'विष्णु' हुन्, मीठो पकवान खानु शुभ मानिएको छ ।

५६ देखि ६० मिनेटसम्म : विवाह, कुरा छिन्ने आदिका लागि प्रस्थान, अन्तर्वार्ता, मुद्दा मामिला आदिका लागि यो समय शुभ छ । यस समयका अधिष्ठाता 'हनुमान्' हुन्, सख्खर भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

## श्रावण महिनाको वक्र काल

१ देखि ५ मिनेटसम्म : व्यापार आदिका लागि अपेक्षाकृत ठीक छ । प्रारम्भमा विलम्ब र पछि सिद्धि । यसका प्रधान देव 'गरुड' हुन्, हरिद्रा खाएर कार्य प्रारम्भ गरियो भने शुभ रहन्छ ।

६ देखि १० मिनेटसम्म : प्रेम प्रदर्शन, प्रणय आदिका लागि यस समयको छनौट ठीक रहन्छ । यस समयका प्रधान देव 'कामदेव' हुन्, मह खाएर जानुहोस् ।

११ देखि १५ मिनेटसम्म : जुवा खेल्नको लागि उपयुक्त समय । यसका प्रधान देव 'वरुण' हुन्, दही खाएर यात्रा गर्नुहोस् ।

१६ देखि २० मिनेटसम्म : मित्रता बढाउन, अधिकार प्राप्त गर्न, स्थानान्तरण आदिका लागि यो समय उपयुक्त छ । यसका प्रधान देव 'सूर्य' हुन्, जीराको प्रयोग गरियो भने विशेष अनुकूल रहन्छ ।

२१ देखि २५ मिनेटसम्म : जासूसी, भेद ज्ञात गर्ने, सामुन्ने भएको व्यक्तिलाई प्रभावित गर्ने आदिका लागि यो समय ठीक छ । यसका प्रधान देव 'वात' हुन्, चामल खाएर जानुहोस् ।

२६ देखि ३० मिनेटसम्म : यात्रादिका लागि यो समय अनुकूल छ । 'मरुत' यसका देव हुन् । सख्खर खाएर जाँदा राम्रो हुन्छ ।

३१ देखि ३५ मिनेटसम्म : यात्रा आदिका लागि विशेष अनुकूल छ । यसका प्रधान देव 'गणपति' हुन्, सख्खरको प्रयोग शुभ मानिएको छ ।

३६ देखि ४० मिनेटसम्म : यात्राका लागि केही बाधकारक तर अन्त्यमा ठीक । यसका प्रधान देव 'अग्नि' हुन्, तोरी चपाएर कार्य गर्दा उत्तम रहन्छ ।

४१ देखि ४५ मिनेटसम्म : प्रेम, वाद्य, जुवा आदिको लागि शुभ समय छ । यसका प्रधान देव 'पुष्पधन्वा' हुन्, मह खाँदा शुभ हुन्छ ।

४६ देखि ५० मिनेटसम्म : व्यापार, व्यवसायका लागि सामान्य अनुकूल । यसका प्रधान देव 'चन्द्रमा' हुन्, दही खानु शुभ मानिएको छ ।

५१ देखि ५५ मिनेटसम्म : व्यापारादि कार्यहरूका लागि यो शुभ समय छ । यसका प्रधान देव 'गुरु' हुन्, बेसनको प्रयोग शुभ मानिएको छ ।

५६ देखि ६० मिनेटसम्म : जुवा, दौड, सिनेमा, व्यापार आदिका लागि यो उपयुक्त समय हो । यसका प्रधान देव 'शुक्राचार्य' हुन् । पकवान खाएर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

## श्रावण महिनाको शून्य काल

१ देखि ५ मिनेटसम्म : प्रत्येक कार्यका लागि व्यवधानपूर्ण, तर 'गौरी'लाई स्मरण गरेर र दही खाएर कार्य प्रारम्भ गर्दा केही अनुकूलता ।

६ देखि १० मिनेटसम्म : प्रत्येक कार्यका लागि अशुभ

एवं बाधाकारक । 'हिडिम्बा'को ध्यान गर्नुहोस् । घिउको भक्षण शुभ ।

११ देखि १५ मिनेटसम्म : कार्यको प्रारम्भमा तनावहरू, तर पछि स्थितिमा सुधार, प्रधान देव 'अग्नि'को स्मरण र तिल खानु शुभ ।

१६ देखि २० मिनेटसम्म : प्रत्येक कार्यका लागि सामान्य अनुकूल । प्रधान देवता 'मकरध्वज'को स्मरण गर्नुहोस् । तोरी खानु शुभ ।

२१ देखि २५ मिनेटसम्म : जुवा खेल्नका लागि शुभ, यस समयका देवता 'काल' हुन्, मह खाएर गइयो भने अनुकूल ।

२६ देखि ३० मिनेटसम्म: प्रत्येक कार्य अथवा यात्रादिका लागि प्रारम्भमा बाधाकारक तर पछि शुभ । तर पनि 'लक्ष्मी'लाई स्मरण गर्नुहोस् । चामल चपाउनु शुभ ।

३१ देखि ३५ मिनेटसम्म : बाधाकारक समय, तर मुद्दा मामिला आदिका लागि शुभ । 'हनुमान्'लाई स्मरण गरेर, सख्खर, घिउ खाएर जाँदा भने अनुकूल ।

३६ देखि ४० मिनेटसम्म : जुवा, मद्य, घोडा दौड, सौन्दर्य प्रसाधन सामग्री बिक्री, व्यापार आदिको लागि अनुकूल । प्रधान देवता 'विश्वकर्मा' हुनुहुन्छ, सख्खर र घिउ खानु शुभ ।

४१ देखि ४५ मिनेटसम्म : प्रणय प्रसङ्ग, मद्यपान, जुवा, घोडादौड आदिका लागि अनुकूल । 'शुक्राचार्य'को स्मरण गर्नुहोस् र फल खाएर जानुहोस् ।

४६ देखि ५० मिनेटसम्म : यात्रादिका लागि विपरीत समय, शुभ कार्यहरूमा वर्जित, 'चित्रगुप्त'लाई स्मरण गर्नुहोस् तथा फूल चपाएर कार्य प्रारम्भ गरियो भने केही अनुकूलता ।

५१ देखि ५५ मिनेटसम्म : प्रत्येक कार्यका लागि अशुभ एवं तनावपूर्ण, तर पनि 'गणपति'लाई स्मरण गरेर र सख्खर खाएर कार्य प्रारम्भ गरिन्छ भने शुभ ।

५६ देखि ६० मिनेटसम्म : शुभ, यात्रादिका लागि अनुकूल, प्रधान देवता 'ब्रह्मा'लाई स्मरण गर्नुहोस्, र दही भक्षण शुभ ।

जय गुरुदेव !

**तान्त्रिक साधना तान्त्रिक ध्यान**
**मानव जीवनको वास्तविक ज्ञान**



# दुःख वरणयोग्य छ

महाभारतको युद्ध समाप्त भइसकेको थियो । विजयी धर्मराज सिंहासनासीन भइसकेका थिए । अब भगवान् श्रीकृष्ण पनि द्वारका जान लाग्नुभएको थियो । यसै समयमा देवी कुन्ती उहाँको समीपमा आइन् र उहाँसँग प्रार्थना गर्न लागिन् । उनको प्रार्थना साह्रै अद्‌भुत थियो । उनले आफ्नो प्रार्थनामा भगवान्‌सँग यस्तो कुरा मागिन् कि जुन सायदै कसैले माग्ने साहस गरोस् । उनले भनिन् कि—

**विपदः सन्तु नः शश्वत्तत्र तत्र जगद्‌गुरो ।**
**भवतो दर्शनं यत्स्यादपुनर्भवदर्शनम् ।।**

(श्रीमद्‌भागवत १।८।२५)

'हे जगद्‌गुरु ! जीवनमा बारम्बार ममाथि विपत्ति नै आइरहून् किनकि जसको दर्शनको कारण जीव फेरि यो संसारमा आउँदैन, यस्ता हजूरको दर्शन त ती विपत्तिहरुमा नै हुन्छ ।'

यो देवी कुन्तीको आफ्नो अनुभव हो । उनको जीवन विपत्तिमा नै बित्यो, उनले जीवनकालमा यो राम्रोसँग अनुभव गर्न सकिन् कि विपत्तिको समयमा नै मंगलमय भगवान् निरन्तर चित्तमा निवास गर्नुहुन्छ । अब उनको पुत्रहरुको राज्य निष्कण्टक भयो । उनलाई लाग्यो कि विपत्तिरुपी निधि अब हातबाट गयो । यसकारण उनले श्यामसुन्दर भगवान्‌सँग विपत्तिको वरदान मागिन् ।

प्रमादयुक्त सुखी जीवन धिक्कार्न योग्य छ । धन्य छ त्यो विपद्‌ग्रस्त जीवनको दुःखपूरित क्षण, जुन बेलामा भगवान्‌को स्मरण हुन्छ ।

योग विशेषअन्तर्गत प्रत्येक अङ्कमा योगासन पद्धतिका विभिन्न विषयहरूका बारेमा क्रमश: अध्ययन गर्ने अवसर पाइरहेका छौँ । कहिले योग आसन, कहिले योग पद्धतिमा अपनाउनुपर्ने आचरणका कुराहरू र कहिलेकाहीं बाह्य रहन-सहन, खानपान, चालचलनका बारेमा हामीले अध्ययन गर्न पाइरहेका छौँ । वास्तवमा भन्ने हो भने योगासन सफल वा असफल हुनुमा अथवा यसबाट फाइदा पाउनु वा नपाउनुमा हाम्रा विविध क्रियाकलापहरू बढी जिम्मेवार हुन्छन् । यद्यपि योगासनबाट हाम्रा समस्त विचार भावनाहरू सकारात्मक हुन्छन् तापनि प्रारम्भमा नै यसको अपेक्षा गर्न सकिन्न । तर आफ्ना विचार, भावना, सोचाइलाई सकारात्मक बनाउन हामी जुन योगासनहरू गर्छौं, त्यसको फल प्राप्त नभएसम्म हामीले बलपूर्वक नै आफूलाई सकारात्मक बनाउनुपर्ने आवश्यकता पनि यहाँ महसुस गरिन्छ । हामीले नकारात्मक विचारलाई आफ्नो मन मन्दिरमा स्थान दिएर योगासनबाट शीघ्र फलको आशा राख्छौं भने यो सम्भव हुनै सक्दैन । योगको वैज्ञानिक रहस्य नै यो छ कि यसले सकारात्मक विचारलाई तल खस्न दिँदैन, अझ माथि, झन् माथि, पुन: माथि लगेर उच्चावस्थामा पुऱ्याएपछि आफ्नै स्वरूपको दर्शन गराउँछ । यही स्वरूप नै आत्मतत्त्व हो, यही नै परमात्मतत्त्व हो, यही नै भगवद्तत्त्व हो, यही नै गुरुतत्त्व हो अनि यही नै आफूलाई सद्गतितिर लगेको बलियो प्रमाण हो किनकि आत्मोन्नतिबिना संसारको कुनै पनि पदार्थले हामीलाई स्थायी र वास्तविक आनन्द दिन सक्दैन । वास्तविक परमानन्द त आत्मानुभूतिमा छ । त्यसैले यसैको लागि जीवनमा प्रयत्न गर्दै रहनु हाम्रो परम कर्तव्य हो ।

आउनुहोस्, यस अङ्कमा हामी पुन: एकपटक शारीरिक, मानसिक तथा आत्मिक शक्तिलाई पुनर्जीवन दिने यौगिक आसनतिर नै जाऔं । यस अङ्कमा हामीले अध्ययन गर्नेछौं सर्पासनको बारेमा । नागासन र भुजंगासन पनि भनिने यस आसनलाई निम्नानुसार सम्पन्न गर्न सकिन्छ -

### आसनको विधि :

- सर्वप्रथम भुइँमा पेटको बलले घोप्टो परेर सुत्ने ।
- हत्केलालाई छातीको समानान्तर हुने गरी कुमसँगै भुइँमा टेकाउने ।
- श्वास-प्रश्वासको गतिलाई सामान्य राख्ने ।
- यसपछि श्वासलाई तान्दै नितम्बदेखि माथिको सम्पूर्ण भाग माथि उठाउने ।
- अनुहारलाई सकेसम्म आकाशतिर फर्काउन प्रयास गर्ने ।
- संयम शक्तिलाई प्रयोग गरेर नितम्बदेखि माथिको भाग र अनुहारलाई जतिसम्म माथि उठाउन सकिन्छ उठाउने ।
- अन्तमा बिस्तारै श्वास छोड्दै छातीलगायत अनुहारलाई हल्का तरीकाले भुइँमा टेकाउने । यसरी नै यो क्रमलाई पाँच-छ पटकसम्म दोहोऱ्याउन सकिन्छ ।

### आसनबाट हुने लाभ :

यस आसनका विविध फाइदाहरू छन् । मुख्यत: पेटको समस्यालाई निराकरण गर्न यो आसन अति नै लाभदायक सिद्ध भएको छ । अपच, गलत खानपानबाट उत्पन्न ग्याष्ट्रिक, कब्जियत, क्षुधा (भोक) नलाग्ने समस्याहरूमा यो आसन परम लाभदायक छ । त्यस्तै, यसबाट फोक्सोको व्यायाम पनि हुन जान्छ । फोक्सोको उचित व्यायामले हामी विविध रोगहरूबाटै सहजै बच्न सक्छौं । यसबाट श्वास प्रश्वास (श्वसन) प्रणाली सुध्रन गएर कफ, दमजस्ता रोगहरू पनि समूल नष्ट हुन पुग्दछन् ।

जय गुरुदेव !

# भावपूर्ण श्रद्धाञ्जलि

जन्म
वि.सं. १९९८ जेठ १९

स्व. वीरमर्दन बस्न्यात

स्वर्गारोहण
वि.सं. २०६५ श्रावण १९

हाम्रा प्रातः स्मरणीय डा. वीरमर्दन बस्न्यातको वार्षिक पुण्य तिथिमा उहाँको आत्माको चिर शान्तिको लागि परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको चरणकमलमा भावपूर्ण प्रार्थना गर्दछौं ।

श्रीमती– राज्यलक्ष्मी बस्न्यात
छोरा– विकेन्द्र बस्न्यात
छोरी– सृजना बस्न्यात
छोरा बुहारी– ई. विशाल बस्न्यात, लुभा बस्न्यात
नाति नातिनी– श्वेता, सुरज, नेहा बस्न्यात
छोरी ज्वाईं– रचना कार्की, बुद्धि कार्की
नाति नातिनी– सृष्टि, प्रज्ञान कार्की

कुनै पनि काम सानो र ठूलो हुँदैन । श्रम गर्न नहिच्किचाऔं । श्रमको सम्मान गरौं । उत्पादन र उत्पादकत्व बढाउन शिक्षित र सचेत बनौं र अरूलाई पनि बनाऔं ।

नेपाल सरकार

**सूचना तथा सञ्चार मन्त्रालय**

सूचना विभाग

# गुरु गीता

आत्मीय पाठकवर्ग, गुरुको महिमा र महत्त्वको बारेमा शास्त्रले उल्लेख गरेका विषयहरूलाई जनसमक्ष उजागर गर्दै गुरुप्रतिको सच्चा भाव र भक्ति जागृत गर्ने उद्देश्यले यस स्तम्भअन्तर्गत अर्थसहित प्रकाशित गर्दै आइरहेका छौँ ।

**सर्व सन्देहसन्दोह**
**निर्मूलन विचक्षणः ।**
**जन्म-मृत्यु भयघ्नो यः**
**स गुरुः परमो मतः ॥१७१॥**

भावार्थ : सबै प्रकारका शंकालाई नष्ट गर्नमा कुशल, जन्म-मृत्युको डरलाई हटाउन सक्नेलाई नै परमगुरु मानिन्छ । सांसारिक ज्ञान दिने गुरुबाट यस संसारका वस्तुहरू तथा भोग त प्राप्त हुन सक्ला तर परमानन्दको प्राप्ति सम्भव छैन । आफ्नै स्वरूपसँग सम्बन्धित अज्ञानलाई नष्ट गरेर जीवलाई उसको वास्तविक स्वरूपसँग परिचित गराएर कर्म-बन्धनबाट विमुक्ति दिनु परमगुरुको नै कार्य हो ।

**बहु जन्मकृतात् पुण्यात्**
**लभ्यतेऽसौ महागुरुः ।**
**लब्ध्वाऽमुं न पुनर्याति**
**शिष्यः संसारबन्धनम् ॥१७२॥**

भावार्थ : अनेक जन्ममा गरेका पुण्यहरूद्वारा नै सद्गुरुको प्राप्ति हुन्छ । शिष्य यस्ता परमगुरु वा सद्गुरुलाई प्राप्त गरेर बन्धनमुक्त भएर धन्यधन्य हुन्छ। सद्गुरु परम पावन प्राप्तव्य तत्त्व हुनुहुन्छ, उहाँलाई प्राप्त गर्नका निमित्त शिष्यले पावनतम एवं पुण्यमय हुनु आवश्यक छ । जब यस्तो स्थिति आउँछ, तब उहाँ शिष्यको जीवनमा आएर स्वयं उपस्थित हुनुहुन्छ किनकि खोज दुवै तर्फबाट नै हुन्छ ।

**मोहादिरहितः शान्तो**
**नित्यतृप्तो निराश्रयः ।**
**तृणीकृत ब्रह्मविष्णु**
**वैभवः परमो गुरुः ॥१७३॥**

भावार्थ : मोह, मायादि रहित, शान्त, सधैँ प्रसन्नतायुक्त, ईश्वरको आश्रय चाहने, ब्रह्मा र विष्णुको वैभवलाई पनि तृणवत् ठान्नेलाई सद्गुरु मानिन्छ, किनकि ब्रह्मत्व प्राप्त व्यक्तित्वका लागि समस्त संसारका दृश्यमान र यहाँ पाइने समस्त सुखहरूको कुनै अर्थ छैन । वास्तवमा हेर्ने हो भने संसारमा सुख कतै छँदैछैन, खाली सुखको कल्पना मात्र हो । यदि मिठाई खाँदा सुख हुन्छ भने त्यही मिठाई रुग्णावस्थामा खानु हानिकार पनि छ ।

**इदमेव शिवं इदमेव शिवम्**
**इदमेव शिवं इदमेव शिवम् ।**
**हरिशासनतो हरिशासनतो**
**हरिशासनतो हरिशासनतो ॥१७४॥**

भावार्थ : यहाँसम्म कि भगवान् विष्णु तथा भगवान् शिव पनि यही भन्नुहुन्छ कि यस समस्त ब्रह्माण्डमा गुरुभन्दा ठूलो अरू कुनै शक्ति छैन, गुरुभन्दा बढी कुनै ज्ञान छैन, गुरुभन्दा बढी कुनै चेतना छैन । गुरु नै यस विश्वका सृजनकर्ता, पालनकर्ता एवं संहारकर्ता हुनुहुन्छ। तसर्थ, गुरु नै सदैव आराध्य हुनुहुन्छ, पूजनीय हुनुहुन्छ । यस्ता श्री गुरुलाई म भक्तिभावले प्रणाम गर्दछु ।

**द्वैताद्वैत विनिर्मुक्तः**
**स्वानुभूति प्रकाशवान् ।**
**अज्ञानान्धतम श्छेत्ता**
**सर्वज्ञः परमो गुरुः ॥१७५॥**

भावार्थ : द्वैतको अर्थ हुन्छ– भेद ज्ञान, म बेग्लै हुँ, यिनीहरू बेग्लै हुन्, यो मेरो हो, यो तिम्रो हो । अद्वैतको अर्थ हुन्छ– अभिन्न ज्ञान, यो दृश्यमान विश्व प्रपञ्च, ईश्वरबाट उत्पन्न हुनेवाला र उहाँभन्दा भिन्न छैन अर्थात् ईश्वररूप छ । यी दुवै प्रकारका ज्ञानरहित, आफ्ना आत्मस्वरूपको अनुभूतिले युक्त, शिष्यका अज्ञानरूपी अन्धकारलाई ज्ञानरूपी प्रकाशले समाप्त गरिदिने केवल सद्गुरु नै हुनुहुन्छ । तसर्थ, सद्गुरुलाई प्राप्त गर्ने प्रयास गर्नै पर्दछ ।

**यस्य दर्शनमात्रेण**
**मनसः स्यात् प्रसन्नता ।**
**स्वयं भूयात् धृतिश्शान्तिः**
**स भवेत् परमो गुरुः ॥१७६॥**

भावार्थ : जसको दर्शन मात्रले मन तथा हृदय आनन्दले आप्लावित हुन्छ, प्रसन्न हुन्छ, स्वतः नै धैर्य र शान्ति उत्पन्न हुन्छ, उहाँ सद्गुरु हुनुहुन्छ । सद्गुरुको पहिचान यही नै हो कि जसको नजिक बस्नाले मात्र पनि शान्तिको अनुभव हुन्छ किनकि संसारको प्रत्येक वस्तु सन्तापमय छ, जीव अनन्तकालसम्म यताउता भट्किएर, सन्तप्त भएर सद्गुरुको खोजी गर्दछ र उहाँका चरणहरूको छत्रछायाँ प्राप्त भएपछि शान्तिको अनुभव गर्दछ । जय गुरुदेव !

# श्री गोरक्ष स्तवन

आत्माखलु विश्वमूलम् ॐ कृण्वन्तो विश्वमार्यम् ।
गोरक्ष बालं गुरुशिष्यपालं शेषहिमालं शशिखण्डभालम् ।
कालस्य कालं जितजन्मजालं वन्दे जटालं जगदाब्जनालम् ।।

गोरक्षनाथ भवरूप भवाब्धिपोत,
भक्तार्तिनाशन विभो करुणैकमूर्ते ।
त्वत्पाद-पद्म-मकरन्द-मधुव्रतोऽहं,
तापं, मदीयमनसो हर देव सद्यः ।१।

गोरक्षनाथ मयि चेत् करुणातवेदृक्,
दीनस्त्वदीयचरणौं शरणं प्रपद्ये ।
नश्येदवश्यमथमानसवेदना में,
सिद्धिं ब्रजेन्निखिलब्रह्मविधिर्हि लोके ।२।

गोरक्षनाथ-रजसा चरणस्थितेन,
पूतं शिरो भवति भक्तजनस्य नूनम् ।
त्वद्दर्शनं हरति तस्य समस्तचिन्तां,
त्वत्सेवनं हरति पाप-पिशाच-पुञ्जम् ।३।

हे नाथ ! मामपि विलोकय दीनबन्धो,
सन्ताप-तप्त-हृदयं कृपणं क्षणेऽस्मिन् ।
पादानेते शिरसि मे वरदात्म-हस्तं,
कामं निधेहि गुरुदेव ! भवानुकूलः ।४।

दोषकरोऽस्मि भगवन्नुकम्पनीयः
निर्दोषता न सुलभा जगतीतलेऽस्मिन् ।
दोषकरेऽपि विमलद्युतिसंयुतेऽपि,
किं लाञ्छनं मनुजदृष्टिपथं न याति ।५।

आक्रम्यते जगति नैकविधैर्हि रोगै,
भोगी जनो विततभोग-विमूढचेताः ।
गोरक्षपाद-सरसीरुह-पूजनन्तु,
व्याधीर्हिनस्ति सकलान् खलु भोगमूलान् ।६।

बद्धोऽस्मि देव भव-मोह-समूह-जाले,
मोच्यस्त्वया सदयमार्तिहरेण तूर्णम् ।
देया च मे शुभमतिः सततंययाऽहं,
त्वत्पाद-पद्म-युगलं विमलं भजेयम् ।७।

गोरक्षपत्तनमिदं प्रथितं पृथिव्यां,
तेपे तपः सततमत्र भवान् मुनीन्द्रः ।
योगस्य मार्गमुपदिश्य जनान् कृतार्थान्,
चक्रे भृशं सकललोक-शुभाभिलाषी ।८।

## हवन कार्यक्रम

परमपूज्य सद्‌गुरुदेवहरूको परम कृपा, अनुकम्पा एवं आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले प्रत्येक महिनाको पहिलो हप्ताको विभिन्न बारहरूमा विभिन्न मन्दिर तथा शक्तिपीठहरूमा सम्पन्न गर्दै आइरहेको मासिक हवन कार्यक्रमहरूलाई गत आषाढ महिनामा पनि निरन्तरता दियो । हवन कार्यक्रमहरूअन्तर्गत आषाढ १ गते श्री शिव गोरक्ष हवन कार्यक्रम पशुपति मृगस्थलीस्थित गुरु गोरखनाथको मन्दिर प्रांगणमा, आषाढ २ गते तान्त्रोक्त वटुक भैरव हवन कार्यक्रम लगनखेलस्थित वटुक भैरव मन्दिर प्रांगणमा, आषाढ ३ गते तान्त्रोक्त महालक्ष्मी हवन कार्यक्रम लगनखेलस्थित महालक्ष्मी मन्दिर प्रांगणमा तथा आषाढ ४ गते तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम पाटन कुम्भेश्वरस्थित बगलामुखी मन्दिर प्रांगणमा सम्पन्न भयो। उपरोक्त हवन कार्यक्रमहरूमध्ये तान्त्रोक्त वटुक भैरव हवन कार्यक्रम बिहान ७:०० बजेदेखि ८:०० बजेसम्म तथा अन्य हवन कार्यक्रमहरू बिहान ८:०० बजेदेखि ९:०० बजेसम्म सञ्चालन भएको थियो ।

यस्तै मासिक हवनकै शृङ्खलामा सम्पर्क कार्यालय रामघाट पोखराको आयोजनामा गत आषाढ ३ गते बुधबार स्थानीय विन्ध्यवासिनी मन्दिर प्रांगणमा तान्त्रोक्त विन्ध्यवासिनी हवन कार्यक्रम सम्पन्न भयो भने यता सम्पर्क कार्यालय तनहुँको आयोजनामा आषाढ ४ गते बिहीबार स्थानीय वेद व्यास गुफा परिसरमा तान्त्रोक्त महर्षि वेदव्यास हवन कार्यक्रम सम्पन्न भयो। यी हवन कार्यक्रमहरू पनि बिहान ८:०० देखि ९:०० बजेसम्म सञ्चालन भएका थिए ।

## दिव्य गुरु महोत्सव

परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजले यस धरामा डा. नारायण दत्त श्रीमालीको स्वरूपमा अवतरण लिनुभएको पावनतम् दिन अर्थात् अंग्रेजी महिनाको २१ तारिखलाई दिव्य गुरु महोत्सवको रूपमा प्रत्येक महिना मनाउँदै आइरहेको सिद्धाश्रम शक्ति केन्द्रले गत आषाढ महिनामा पनि यस कार्यक्रमलाई भव्यरूपमा सम्पन्न गऱ्यो । गत आषाढ ७ गते काठमाडौँको धापासीस्थीत पूर्व प्रहरी संघको हलमा उक्त कार्यक्रम आयोजना भएको थियो । बिहान १०:१५ बजे प्रार्थना, निखिल स्तवन, गोरक्ष स्तवनको सस्वर पाठबाट शुभारम्भ भएको उक्त कार्यक्रम दुई चरणमा विभाजित थियो ।

कार्यक्रमको पहिलो चरणअन्तर्गतका क्रममा गुरु पादुका पूजन, मंत्र जप, हवन, आरती आदि सम्पन्न भएका थिए । कार्यक्रममा गुरु पादुका पूजन गर्ने सौभाग्य प्रसाद वितरणको अभिभारा बहन गर्दै सुमित्रा लामा, जमुना तिवारी, सन्दीप के.सी. र महालक्ष्मी पराजुलीले प्राप्त गर्नुभएको थियो ।

दोस्रो चरणको शुभारम्भमा सिद्धाश्रम शक्ति केन्द्रको तर्फबाट गु.से.द. नं ३२ का सदस्य साधक बालकृष्ण श्रेष्ठले स्वागत मन्तव्य राख्नुभएको थियो । दोस्रो चरणका अन्य क्रमहरूमा भजनकीर्तन, प्रवचन, नृत्य, पोशाक वितरण आदि रहेका थिए ।

प्रवचन/स्ववचनको क्रममा सावर पन्थी नं. १का सदस्यज्यूले भन्नुभयो– नेपाल तान्त्रिक भूमी हो । सिद्धाश्रमको आधाजस्तो भाग कर्णाली प्रदेशमा रहेको छ । पृथ्वीको आज्ञाचक्रको रूपमा रहेको नेपालमा विश्व ब्रम्हाण्ड प्रवेशद्वारको साँचो रहेको छ । ब्रम्हाण्डका नायकहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई गुरुरूपमा धारण गर्न पाउनु हाम्रो अहोभाग्य हो । गुरुदेवहरूको संस्था सिद्धाश्रम शक्ति केन्द्र पनि अद्वितीय भएकाले यस संस्थासँग आबद्ध हामी साधक साधिकाहरू पनि अद्वितीय हुने मार्ग तर्फ उन्मुख हुनु आजको आबश्यक्ता हो भन्ने कुरामा जोड दिँदै उपरोक्त रहस्यहरू माथि प्रकाश पार्नु भएको थियो । यसै गरी सावर पन्थी नं.२ का सदस्यज्यूले भन्नुभयो– हाम्रा परमआराध्य सद्‌गुरुदेवहरूको कृपा आशीर्वादले सिंचित एवं सञ्चालित विश्वमै अद्वितीय आध्यात्मिक संस्था भएकाले नेपाल लगायतका विश्वका कुनै पनि धार्मि क या आध्यात्मिक संघ संस्था अन्तमा स्वत: सहजरूपले सिद्धाश्रम शक्ति केन्द्ररूपी महासागरमा अन्य नदीहरू समुद्रमा समाहित भएझैं समाहित हुन आइपुग्ने छन् । हामी त स्वत: नै शुरुदेखि नै हासागरमा समाहित भैरहेका छौं, यही नै हाम्रो ठूलो सौभाग्य हो । नेपालको मानचित्र नै तान्त्रिक स्वरूप छ, त्यसैले आजको नेपालको राजनीतिक उथलपुथलको स्वरूप जस्तो रहेपनि तान्त्रिक भूमी नेपाल, गोरख भूमी नेपाल, आध्यात्मिक भूमी नेपालको अस्तित्व र विखण्डन माथि कसैले पनि दखल गर्न नसक्ने विश्वास प्रकट गर्नु भयो । यसैगरी प्रवचनकै क्रममा सावर मातृकाज्यूले वैदिक कालको गुरुकुलको सम्झना गर्दै सिद्धाश्रम शक्ति केन्द्रमा गुरु शिष्यबीचको सम्बन्ध, व्यवहार र नियमानुशासन अबलम्बन प्रति कृतज्ञता प्रकट गर्दै आभार व्यक्त गर्नुभयो ।

कार्यक्रममा गुरु सेवा दलका पूर्व नवप्रवेशीहरूलाई पोशाक पनि वितरण गरिएको थियो । कार्यक्रम अपरान्ह ३:३० बजे समापन गरिएको थियो ।

## चुम्यो शिखर जपसंख्याले

–'कति जप्नुभयो ?'

–'एक सय एक ।'

सवालको जवाफ दिँदै एक साधक पानी खाँदै हुनुहुन्थ्यो । घडीले दिउँसोको ३:०० बजेको संकेत दिइसकेको थियो । उहाँ पानी खाएर पुन: माला जप्न तोकिएको ठाउँमा गएर बस्नुभयो । पहेँलो चादर ओढेर आँखा बन्द गरेर उहाँजस्ता धेरै साधक साधिकाहरू बस्नुभएको थियो । आँखा बन्द गरेर माला जपमा व्यस्त साधक साधिकाहरू सकेसम्म निर्धारित १०१ माला गुरु मन्त्र जपमा व्यस्त देखिनुहुन्थ्यो । सकेसम्म बढी माला जप्नमा सबै तम्सिनुभएको थियो ।

साधक साधिकाहरूको यो तम्स्याइ अन्य कारणले नभई ११ औं महाप्रयाण दिवसको अवसरमा निर्धारित जप संख्या पुऱ्याउनका लागि थियो । बिहान ९:०० बजेदेखि शुभारम्भ भएको जप समय साँझ ४ बजेसम्म अटुट चलेको थियो ।

काठमाडौंको बसुन्धरास्थित सिद्धाश्रम शक्ति केन्द्रको केन्द्रीय कार्यालयका अतिरिक्त काठमाडौं उपत्यकाभित्रका सम्पर्क कार्यालयहरू र गोरखा, तनहुँ, पोखरा, पाल्पा, स्याङ्जा, चितवन, बनेपा, भक्तपुर, ललितपुर, सर्लाही, लमजुङ, सिन्धुलीमा रहेका संस्थाका १८ वटा सम्पर्क कार्यालयहरूमा पनि उक्त समयमा गुरु मन्त्र जप भएको थियो ।

स्मरण रहोस्, आफ्नो कार्यलाई आफ्ना शिष्यहरूको काँधमा छोडेर परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यू आफ्नो संन्यासी स्वरूपमा फर्किनुभएको दिन अर्थात् जुलाई ३ तारीखलाई सिद्धाश्रम शक्ति केन्द्रले महाप्रयाण दिवसको रूपमा मनाउँदै आइरहेको छ । यस दिनमा अघिल्ला वर्षहरूमा झैं परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको मन्त्र (गुरु मन्त्र) जप गरिएको थियो । ११ औं महाप्रयाण दिवसको अवसरमा करोडभन्दा बढी संख्यामा मन्त्र जप भएको छ ।

## सावर पन्थीज्यूहरूको रूस भ्रमण

सावर पन्थी सदस्य नं. १ र २ ज्यूहरू गत असार १० गते रुसको भ्रमणमा जानुभयो । गुरुदेवहरूको चिन्तन र संस्था विस्तारका क्रममा उहाँहरू रुस जानुभएको हो । उहाँहरूको यो चौथो रुस भ्रमण हो ।

सावरपन्थी सदस्यद्वयले रुसमा गणेश साधना पनि सम्पन्न गराउनुभएको छ । भ्रमण अवधिमा उहाँहरूले रुसमा सिद्धाश्रम शक्ति केन्द्रको विस्तार योजनालाई मूर्तरूप दिने प्रयत्न गर्नुहुनेछ ।

## 'महायोगीहरूको परिचय' रूसी भाषामा

सावर शक्ति संरचना केन्द्रबाट प्रकाशित 'महायोगीहरूको परिचय' ग्रन्थ रुसी भाषामा पनि प्रकाशित भएको छ । रुषी भाषामा प्रकाशन भएपछि उक्त ग्रन्थ अब तीन भाषामा पढ्न सकिने भएको छ ।

स्मरण रहोस्, छैटौं रोट महोत्सवताका उक्त ग्रन्थको अंग्रजी संकरणको गुरु चरणार्पणपश्चात् लोकार्पण गरिएको थियो ।

## बाह्रबिसेमा रक्तदान

गुरु पूर्णिमा महोत्सवलाई सिद्धाश्रम शक्ति केन्द्र बाह्रबिसेले गत आषाढ २३ गते विविध कार्यक्रम गरी मनायो । उक्त अवसरमा बिहान १०:१५ बजे प्रार्थनाबाट शुरु भएको कार्यक्रममा गुरु पूजन, मन्त्रजप, हवन, आरती, भजनकीर्तन आदि क्रमहुँदै अपराह्न २:१५ पछि रक्तदान पनि गरिएको थियो । २४१ जना साधक साधिका उपस्थित हुनु भएको उक्त गुरु पूर्णिमाको कार्यक्रममा ५४ जनाले रक्तदान गर्नुभएको थियो ।

## सम्पर्क कार्यालय अब अठार पुग्यो

गत असार ८ गते सोमबारको पावन अवसरमा प्रस्तावित सम्पर्क कार्यालय पुरानो बानेश्वर सम्पर्क कार्यालयमा रूपान्तरित भएको छ । यस रूपान्तरणसँगै सिद्धाश्रम शक्ति केन्द्रका नेपालभरि रहेका सम्पर्क कार्यालयहरूको सङ्ख्या अठार पुगेको छ ।

संस्थामा हालै अज्ञात नाथ पन्थी (अ.ना.प.) शैली भित्रिएपछिको प्रस्तावित सम्पर्क कार्यालय सम्पर्क कार्यालयमा रूपान्तरित भएको यो पहिलो अवसर हो ।

# अध्यात्मवाद जिन्दावाद

देशमा फेरि अन्यौलको वातावरण बढ्दैछ। सबैलाई आ–आफ्नै डम्फु बजाउँदैमा ठिक्क छ। देशको बारेमा, समाजको बारेमा, जनताको बारेमा सोच्ने फुर्सद कसैको पनि देखिएन। सबै 'बिजी' छन्। तपाईँ फोन गरेर हेर्नुस् त, सबैलाई व्यस्त पाउनुहुन्छ। तर यो व्यस्तता केका लागि, कसका लागि र किन? जवाफ भने स्पष्ट पाइँदैन। विशेष गरेर शहरी क्षेत्रमा प्रत्येक व्यक्ति कुदिरहेको देखिन्छ, चिन्तित भइरहेको देखिन्छ। के–के न गरौँला जसरी लागिरहेको देखिन्छ तर गरेको भने केही देखिन्न। राजनीतिकर्मी हुन् वा कर्मचारी, मजदुर हुन् वा विद्यार्थी, पत्रकार हुन् वा समाजसेवी, धार्मिक हुन् वा नास्तिक, सबैलाई रंग चढेको छ, नशा चढेको छ धन थुपार्ने। Anyhow धन कमाऊ भन्ने नयाँ उखान समाजमा चरितार्थ हुँदैछ। अपहरण, हत्या, लूट, डकैती, यी सबै त आजभोलि हामी नेपालीका लागि सामान्य घटना भइसकेका छन्। तर पनि कसैमा चेत आएको देखिँदैन। नेपालीमा एउटा उखान छ– आकाशको राहु पातालको केतु, एकपल्ट नपरी कसरी चेतुँ। यहाँ त यो उखानको उक्ति पनि सान्दर्भिक नहुने स्थिति भइसक्यो किनकि यो उखान सिर्जना गर्दा मानिसले एकपल्ट गल्ती गरेपछि चेत्ने गर्थे होलान्। तर अहिले त दशपल्ट गल्ती भए पनि चेत आउँदैन। त्यसैले यसलाई त यसो भन्नु सान्दर्भिक होला– आकाशको राहु पातालको केतु, खाल्डामै नपरी कसरी चेतुँ। देशमा राजनैतिक परिवर्तनसँगै आएको चेतनालाई सही दिशा दिन नसकेको दुष्परिणाम अब तपाईँ हामीले भोग्दैछौँ। गल्ती जसले गरेको भए पनि भोग्नचाहिँ सबै जनताले पर्दोरहेछ। हामी स्वतन्त्रताका हिमायती हौँ। स्वतन्त्रताका लागि जनआन्दोलनसमेत थुप्रैपटक गरेर कैयौँले शहादत प्राप्त गरे। भनियो, अब लोकतन्त्र आयो, स्वतन्त्र भयौँ। तर के हामी स्वतन्त्र भयौँ त? के तपाईँले चाहेको कुरा गर्न सक्नुहुन्छ? चाहेको समयमा चाहेको ठाउँमा जान सक्नुहुन्छ? अनावश्यक दुर्गुणहरु हटाउन सक्नुहुन्छ? आफ्नो सोचाइलाई परिवर्तन गर्न सक्नुहुन्छ? दुर्व्यसनलाई त्याग्न सक्नुहुन्छ? कुरा काट्ने बानी हटाउन सक्नुहुन्छ? यदि यी सबै प्रश्नको उत्तर सकारात्मक छ भने त तपाईँ स्वतन्त्र हुनुहुन्छ, अन्यथा...। राजनैतिक परिवर्तनले मात्रै मानिस स्वतन्त्र हुँदैन। यसका लागि त आफूले आफैलाई नियन्त्रण गर्न सक्नुपर्छ। 'स्व'को अर्थ आफू र 'तन्त्र'को अर्थ व्यवस्थित पार्नु हुन्छ। यसर्थ, आफूले आफैलाई नै जसले व्यवस्थित पार्न सक्तैन, ऊ कसरी स्वतन्त्र हुन्छ? उसले कसरी अरुलाई स्वतन्त्रता दिलाउन सक्छ? जसले आफैमाथि शासन गर्न सक्तैन, अरुलाई कसरी प्रशासन लगाउँछ? बिचरो आफ्नै शासनमा बस्न नसकेर विभिन्न रोग, भोग र शोकले पीडित छ, उसैले अरुलाई अनुशासनको पाठ सिकाइरहेछ। अनि कसरी हुन्छ देशमा शान्ति र अमन चयन? हामी अध्यात्मकर्मी हौँ। अध्यात्मवाद नै हाम्रो प्राण हो। यो शाश्वत् सत्यलाई बिर्सेर अन्य वाद र उपवाद खोज्दै हिँड्दा प्राप्त भएको अपवादको पर्याय बनेका छौँ हामी नेपाली। अनि कस्तो विडम्बना! जुन देशले विश्वलाई शान्तिको सन्देश दिनुपर्ने हो, त्यही देश आज अशान्तिको पर्याय बनेको छ। हुन त समस्या देखाएर, सुनाएर मात्र समाधान हुने होइन। जसरी दाल भातको नाम जपेर पेट भरिँदैन, त्यसैगरी यस्तो समस्या छ, उस्तो समस्या छ भनेर केही हुनेवाला छैन। जहाँ समस्या हुन्छ, त्यहाँ समाधान पनि अवश्य हुन्छ। तसर्थ, समाधान खोज्न विदेश जाने होइन, अर्कालाई गुहार्ने होइन, अर्काको मुख ताक्ने होइन, आफ्नै समस्याभित्र नियाल्नु जरुरी हुन्छ। त्यही हुन्छ समाधान किनकि समस्या पनि हामीले सृजना गरेका हौँ र समाधान पनि हामीले मात्रै गर्न सक्छौँ। यी सम्पूर्ण समस्याको समाधान अब अन्य कुनै वाद वा दर्शनले गर्न सक्तैन। अब त केवल अध्यात्मवादकै विकल्प बाँकी छ र यही नै अन्तिम विकल्प र वास्तविक समाधान पनि हो। अझै पनि यसप्रति अविश्वास गर्ने हो भने अरु बाँकी नै के रहन्छ र? त्यसैले सबैले भनौँ, अध्यात्मवाद जिन्दावाद!